# आर्थिक वर्ष २०७१/७२

# को

# बजेट वक्तव्य

नेपाल सरकार

अर्थ मन्त्रालय

२०७१

संविधानसभाको व्यवस्थापिका-संसदको बैठकमा
२०७१ साल असार २९ गते आइतबार
अर्थमन्त्री डा. राम शरण महतले
दिनु भएको

# आर्थिक वर्ष २०७१/७२ को
# बजेट वक्तव्य

नेपाल सरकार
अर्थ मन्त्रालय
२०७१

**Website:http://www.mof.gov.np**

सम्माननीय सभामुख महोदय,

१. संविधानसभाको दोस्रो निर्वाचन पश्चात गठन भएको निर्वाचित सरकारको अर्थ मन्त्रीको हैसियतले यस गरिमामय सदनमा आर्थिक वर्ष २०७१/७२ को वार्षिक बजेट प्रस्तुत गर्न उभिएको छु।

२. बजेट तर्जुमा गर्दा मैले नेपालको अन्तरिम संविधानले निर्देशित गरेका सिद्धान्त, चालु तेह्रौं योजनाको आधारपत्र , वर्तमान सरकारको साझा न्यूनतम कार्यक्रम र व्यवस्थापिका-संसदमा बजेट पूर्वको छलफलका क्रममा माननीय सभासदहरूले प्रस्तुत गर्नुभएको विचारहरुलाई मार्गदर्शनको रुपमा लिएको छु। साथै, आर्थिक नीति सुझाव समितिले दिएका सुझाव समेतलाई ध्यानमा राखेको छु।

३. यो बजेटलाई मैले आर्थिक वृद्धि , गरिबी न्यूनीकरण, रोजगारी वृद्धि र समग्र आर्थिक सामाजिक विकासको आधारशीला खडा गर्ने दिशातर्फ केन्द्रित गरेको छु। नेपाललाई सन् २०२२ सम्म संयुक्त राष्ट्र संघद्वारा परिभाषित अति कम विकसित राष्ट्रबाट स्तरोन्नति गराउने लक्ष्य प्राप्ति तर्फ बजेट उन्मुख रहेको छ। बजेट तयारी गर्ने क्रममा मैले देशभित्र उपलब्ध साधन र स्रोतको अधिकतम उपयोग गर्दै जनताले प्रत्यक्ष अनुभूत गर्न सक्ने र नतीजा देखिने कार्यक्रमहरूलाई प्राथमिकतामा राखेको छु।

४. चालु आर्थिक वर्ष २०७०/७१ को समग्र आर्थिक स्थितिको विश्लेषण गरिएको आर्थिक सर्वेक्षण र मन्त्रालय/निकायगत वार्षिक खर्च स्थिति तथा आर्थिक वर्ष २०६९/७० को सार्वजनिक संस्थानहरूको स्थिति समीक्षा यस सम्मानित सदनमा प्रस्तुत गरिसकेको छु।

## आर्थिक परिसूचकहरू

५. आर्थिक वर्ष २०७०/७१ मा आर्थिक वृद्धिदर ५.२ प्रतिशत हुने अनुमान छ। यो वृद्धिदर विगत छ वर्ष यताकै उच्च हो। यस अघि आर्थिक वर्ष २०६४/६५ मा यस्तो वृद्धिदर ५.८ प्रतिशत थियो। चालु आर्थिक वर्षमा वार्षिक औसत

मुद्रास्फीति ८.५ प्रतिशतमा कायम राख्ने लक्ष्य लिइएतापनि ९ प्रतिशत रहने अनुमान छ।

६. चालु आर्थिक वर्षका लागि रू. ५ खर्ब १७ अर्ब २४ करोड विनियोजन गरिएकोमा रू. ४ खर्ब ४९ अर्ब ८५ करोड खर्च हुने संशोधित अनुमान छ। कुल खर्चमध्ये चालुतर्फ रू. ३ खर्ब १६ अर्ब ६४ करोड, पूँजीगत तर्फ रू. ६३ अर्ब ८७ करोड र वित्तीय व्यवस्था तर्फ रू. ६९ अर्ब ३४ करोड खर्च हुने संशोधित अनुमान छ।

७. चालु आर्थिक वर्षमा कुल रू. ३ खर्ब ५४ अर्ब ५० करोड राजस्व संकलनको लक्ष्य पूरा हुने अनुमान छ। वैदेशिक सहयोग तर्फ अनुदान रू. ४७ अर्ब ३१ करोड र ऋण रू. २३ अर्ब ६९ करोड प्राप्त हुने संशोधित अनुमान छ।

८. चालु आर्थिक वर्षको पहिलो दश महिनासम्ममा रू. ६ खर्ब ५३ अर्ब बराबरको विदेशी विनिमय सञ्चित रहेको छ। सोही अवधिमा शोधनान्तर स्थिति रू. १ खर्ब १५ अर्बले धनात्मक रहेको छ। वैदेशिक व्यापार घाटा बढेर रू. ५ खर्ब ५ अर्ब पुगेको भएतापनि सेवा आय, खूद आय, अनुदान र विप्रेषण आप्रवाहमा भएको वृद्धिले चालु खाता रू. ७८ अर्ब ३ करोडले बचतमा रहेको छ।

सभामुख महोदय,

९. लामो समयको राजनीतिक द्वन्द्व र अस्थिरताका बीच पनि विगत दुई दशकको शुरुका अवधिमा अपनाइएका नीति एवं कार्यक्रमहरूका फलस्वरूप कतिपय क्षेत्रमा महत्वपूर्ण उपलब्धि हासिल भएका छन्। आठौं योजनाको शुरुमा ४९ प्रतिशत रहेको गरिबी हाल २३.८ प्रतिशतमा झरेको छ। यसैगरी मानव विकासका सूचकाङ्कमा उल्लेखनीय सुधार, भौतिक पूर्वाधारको विकास, यातायात सञ्जालको विस्तार, सञ्चार क्षेत्रको व्यापकता, सामाजिक सेवाको परिमाणात्मक र गुणात्मक सुधार, अर्थतन्त्रमा निजी क्षेत्रको दरिलो उपस्थिति, सहकारी क्षेत्रको विस्तार र स्थानीय क्षेत्रमा भएका स्वःस्फूर्त विकास निर्माणका प्रयास यस अवधिका महत्वपूर्ण उपलब्धिहरू हुन्।

१०. सार्वजनिक खर्चको महत्वपूर्ण स्रोतको रुपमा रहेको राजस्व परिचालनमा वार्षिक औसत २० प्रतिशतले वृद्धि भएको छ। आन्तरिक स्रोतबाटै राष्ट्रिय महत्वका ठूला आयोजनाहरू सञ्चालन गर्न सकिएको छ र सामाजिक सेवा तथा सुरक्षाका क्षेत्रमा लगानी वृद्धि गर्न सकिएको छ। आन्तरिक ऋण र बजेट घाटा वाञ्छित सीमा भित्र रहेको छ।

११. यसै बीच वर्तमान सरकार गठन भएपछि अर्थतन्त्रमा केही सकारात्मक प्रवृत्ति देखापरेका छन्।

- आर्थिक वृद्धिदर ६ वर्षपछिकै उच्च छ।
- लगानीको वातावरणमा सुधार आई लगानीकर्तामा उत्साह देखिएको छ। वर्तमान सरकार गठन हुँदा ८०३ बिन्दूमा रहेको नेप्से परिसूचक १००० माथि पुगेको छ। शेयर कारोवारको दैनिक रकममा पनि उल्लेख्य वृद्धि भएको छ।
- पूर्वाधार विकासका लागि अन्तर्राष्ट्रिय संस्थाले स्थानीय मुद्रामा ऋणपत्र जारी गर्ने निर्णय र लगानी बोर्डले हालै गरेका निर्णयहरूले ठूला लगानीका परियोजनाहरू अघि बढ्न थालेका छन्।
- अन्तर्राष्ट्रिय समुदायले आर्थिक सहयोग बढाउन थालेको छ। युरोपेली लगानी बैंकजस्ता वित्तीय संस्थाहरु महत्वपूर्ण विकास साझेदारको रूपमा प्रवेश गरेका छन् भने विश्व बैंक र युरोपियन युनियनले वार्षिक सहयोगको मात्रा बढाएका छन्।
- पूँजीगत खर्चको प्रभावकारिता बढेको छ।

सभामुख महोदय,

१२. कतिपय सकारात्मक उपलब्धिहरूका बावजूद नेपालको अर्थतन्त्रमा अझै जटिल चुनौतिहरू रहेको कुरा यस सम्मानित सदनमा विनियोजन विधेयकका सिद्धान्त र प्राथमिकता प्रस्तुत गर्दा नै उल्लेख गरेको थिएँ। समष्टिगत आर्थिक परिसूचकहरू सकारात्मक रहँदा रहँदै पनि अर्थतन्त्र अपेक्षाकृत गतिशील हुन सकेको छैन।

अर्थतन्त्र गतिशील नभइकन आर्थिक सामाजिक रुपान्तरण कोरा कल्पना मात्र हुन्छ। अर्थतन्त्रलाई गतिशील बनाउने सन्दर्भमा देखिएका चुनौतिहरूलाई मैले यसप्रकार प्रस्तुत गरेको छु।

<u>चुनौतिहरू</u>

१३. प्रत्येक वर्ष ५ देखि ६ प्रतिशतको आर्थिक वृद्धिको लक्ष्य राख्ने गरिएता पनि विगत एक दशकको औसत वृद्धिदर ४.१ प्रतिशत मात्र रहेको छ। आगामी ८ वर्षभित्र नेपाललाई मध्यम आय भएका राष्ट्रहरूको समुहमा पुर्याछउनका लागि वार्षिक औसत ८ प्रतिशतभन्दा बढीको आर्थिक वृद्धिदर हासिल गर्नुपर्ने चुनौति छ।

१४. कुल गार्हस्थ उत्पादनमा एक तिहाइ योगदान दिने कृषि क्षेत्र अझै पनि आधुनिक र व्यवसायिक बन्न सकेको छैन। पहिलो जन आन्दोलन पश्चात् भएको नीतिगत सुधारपछि विस्तारित भएको उद्योग क्षेत्रले आर्थिक वर्ष २०५७/५८ को कुल गार्हस्थ उत्पादनमा ९ प्रतिशतसम्म योगदान पुर्या एको थियो। सो योगदान घट्दै हाल ६ प्रतिशतमा सीमित रहेको छ। यसले गर्दा निर्यात व्यापार शिथिल भएको छ भने मुलुक आयातमुखी बन्दै गएको छ। आर्थिक वर्ष २०५७/५८ मा निर्यातले आयातको करिब आधा भाग धान्न सक्ने भएकोमा हाल आएर निर्यात-आयात अनुपात १३ प्रतिशतमा झरेको छ। चालु आर्थिक वर्षमा रू. ६०० अर्बको व्यापार घाटा हुने अनुमान छ।

१५. सरकारी खर्चमा चालु खर्चको मात्रा बढ्दै गएको छ। पछिल्लो दुई वर्षको कूल खर्चमा चालु खर्चको औसत हिस्सा ७० प्रतिशत रहेकोमा पूँजीगत खर्चको औसत हिस्सा केवल १७ प्रतिशत मात्र रहेको थियो। चालु खर्चतर्फ पनि राष्ट्रसेवकहरूको तलब, भत्ता, निवृत्तिभरण तथा अन्य सामाजिक सुरक्षाको अंशमा वृद्धि हुँदै गएको छ।

१६. आगामी आठ वर्षमा विकासशील राष्ट्रको स्तरमा पुग्नका लागि कुल गार्हस्थ उत्पादनको कम्तीमा ३० प्रतिशत स्थिर पूँजी निर्माणमा लगानी हुनुपर्नेमा विगत

तीन वर्षको औसत लगानी २२ प्रतिशत मात्र रहेको छ। कुल स्थिर पूँजी निर्माणमा रहेको कम्तीमा ८ प्रतिशत बिन्दूको खाडललाई पूर्ति गर्न आगामी आर्थिक वर्षमा मात्र थप रू. १६० अर्ब लगानी गर्नुपर्ने आवश्यकता छ। सरकारले त्यसको ३० प्रतिशत हिस्सा मात्र लगानी गर्दा पनि आगामी आर्थिक वर्षमा थप रू. ५० अर्बको सरकारी पूँजी लगानी आवश्यक देखिएको छ। निजी लगानी पनि उल्लेख्य रुपमा हुन सकेको छैन। लगानी नबढ्नाले वाणिज्य बैंकहरूमा अधिक तरलता र संगठित संस्थाहरूमा पूँजीयोग्य कोषको आकार बढ्दो छ।

१७. न्यून पूँजीगत लगानीको अतिरिक्त संरचनागत र संस्थागत समस्याका कारण पूँजीको उत्पादकत्व र प्रतिफल पनि कम छ। पूर्वाधारको कमी , ऊर्जाको अपर्याप्तता, निर्माण कार्यको कमसल गुणस्तर , प्राविधिक क्षमताको कमी तथा नीतिगत, कानुनी एवं प्रक्रियागत व्यवधानहरूले गर्दा सीमान्त पूँजी उत्पादन अनुपात ५ को नजिक छ।

१८. वस्तु र सेवाको उत्पादन तथा वितरण गर्नका लागि स्थापित अधिकांश सार्वजनिक संस्थानहरू समस्याग्रस्त छन्। हाल सञ्चालनमा रहेका ३७ मध्ये १९ सार्वजनिक संस्थान मात्र खूद नाफामा छन्। सार्वजनिक संस्थानहरूको सञ्चित घाटा र कोषविहीन दायित्व बढ्दै गएको छ। एक पछि अर्को संस्थान बन्द हुने वा ठूलो नोक्सानी व्यहोर्नुपर्ने अवस्थामा पुगेका छन्।

१९. शिक्षा, स्वास्थ्य, खानेपानी तथा सरसफाइ जस्ता सामाजिक सेवाहरूको पहुँच र परिमाणमा उल्लेख्य वृद्धि भएतापनि गुणस्तरीयता भने अपेक्षित रुपमा वृद्धि हुन सकेको छैन। शिक्षा क्षेत्र रोजगार र व्यवसाय उन्मुख बन्न सकेको छैन। एकातिर रोजगारीका पर्याप्त अवसरहरू सिर्जना हुन नसकी वर्षेनी हजारौं युवा विदेशिने गरेका छन् भने अर्कातिर मुलुकभित्रै कृषि र उद्योग क्षेत्रमा आवश्यक श्रमशक्तिको अभाव छ।

२०. पूर्वाधार क्षेत्रमा केही विकास भएतापनि द्रुत आर्थिक विकासका लागि अपर्याप्त छ। कमजोर पूर्वाधारले वस्तु र सेवा प्राप्तिको लागत बढाएको छ भने स्थानीय उत्पादनको बजारीकरण हुन सकेको छैन। निर्माणाधीन आयोजनाहरू जग्गा प्राप्ति लगायत स्थानीय अवरोधका कारण समस्यामा छन्। निर्माण कार्यको प्राविधिक परीक्षण हुन सकेको छैन र यस सम्बन्धी संस्थागत क्षमता पनि कमजोर छ।

२१. ऊर्जाको संकट सबैभन्दा ठूलो छ। जलविद्युतमा प्रशस्त अवसर हुँदाहुँदै पनि सोचे जति लगानी आकर्षित भएको छैन। प्रसारण लाइनको अभावमा कतिपय जलविद्युत आयोजनाहरूको निर्माण कार्य प्रभावित भएको छ। नेपाल विद्युत प्राधिकरण एक्लैले उत्पादक , प्रसारक र वितरकको भूमिका खेल्नुपरेकोले व्यवस्थापन प्रभावकारी हुन सकेको छैन।

२२. सहरीकरणको गति बढ्दै गए पनि त्यसका लागि चाहिने न्यूनतम पूर्वाधारको अभाव छ। पहाडी तथा हिमाली क्षेत्रमा बस्तीहरू छरिएकाले पूर्वाधार निर्माण एवं सेवा प्रवाहको लागत बढ्न गएकोछ, कतिपय बस्तीहरू जोखिममा रहेका छन्।

२३. जनतालाई कम लागतमा उच्च गुणस्तरको सेवा प्रवाह गर्नुपर्ने प्रशासनयन्त्र अझै नतीजामुखी हुन सकेको छैन, लगानी र विकास मैत्री बन्न सकेको छैन। राजनीतिक अस्थिरताको प्रत्यक्ष प्रभाव प्रशासनयन्त्रमा समेत परेको छ। कतिपय ऐन, नियम र नीतिहरू विकास प्रक्रिया र सेवा प्रवाहलाई सहजीकरण गर्ने भन्दा अवरोधका कारक बनेका छन्।

सभामुख महोदय,

२४. यी चुनौतिहरूका बीच आर्थिक वर्ष २०७१/७२ को बजेट तर्जुमा गरेको छु। यसको मूल लक्ष्य देशलाई उच्च आर्थिक वृद्धिदरको बाटोमा लैजानु , गरिबीको दुष्चक्रबाट मुक्त गर्नु र दीर्घकालीन विकासको लागि सामाजिक र भौतिक आधारशीला निर्माण गर्नु रहेको छ। एक अर्कासंग अन्तरसम्बन्धित यी उद्देश्यहरूको परिपूर्तिबाट नै मुलुक हामी सबैले परिकल्पना गरेको सामाजिक न्याय सहितको समृद्धितर्फ उन्मुख हुन सक्दछ।

२५. आर्थिक वृद्धि आफैंमा पर्याप्त होइन। महत्वपूर्ण पक्ष भनेको यसले सिर्जना गर्ने विभिन्न आर्थिक अवसर र रोजगारी हुन्। यसबाट वृद्धि हुने राजस्व नै राज्यको ढुकुटी हो जसलाई आर्थिक विकास, सामाजिक न्याय र सुरक्षाका कार्यक्रममा उपयोग गर्न सकियोस्, अनि ऐतिहासिक कालदेखि पछौटेपन, गरिबी, वञ्चितिकरण र विभेदमा परेका समुहको आर्थिक उत्थान र समुन्नतिका लागि सार्वजनिक लगानी बढाउन सकियोस्। आर्थिक वृद्धिको लागि पर्याप्त पूर्वाधारहरूको विकास पूर्वशर्त हो भने गुणस्तरीय जनशक्ति , उत्पादकत्व वृद्धि , शान्ति, सुशासन र लगानीमैत्री वातावरण अनिवार्य शर्त हुन्। यसका लागि सबै क्षेत्रको प्रभावकारी भूमिका आवश्यक हुन्छ।

२६. निश्चय नै माथि उल्लेखित चुनौतिहरूको सम्बोधन र लक्ष्य प्राप्ति एक वर्षको बजेटबाट सम्भव छैन। तर पनि विगतका सफलता र असफलताबाट शिक्षा लिंदै सबल पक्षको जगेर्ना तथा दुर्बल पक्षमा सुधार गर्दै आजका चुनौतिहरूलाई सम्बोधन गर्ने प्रयासको रुपमा यो बजेट प्रस्ताव गरेको छु। नेपाली जनता आफ्नो साहस र प्रतिभाका लागि विश्वभर नै प्रसिद्ध छन्। विषम परिस्थितिमा पनि मौलिक तरिकाले जुध्न सक्ने सामर्थ्य हामीमा छ। यही सकारात्मक पक्षलाई आत्मसात् गरी सामुहिक प्रयासबाट मुलुकको द्रुततर आर्थिक समुन्नति सम्भव छ भन्ने विश्वासका साथ आगामी वर्षका नीति र कार्यक्रमहरू प्रस्तुत गरेको छु।

**<u>शान्ति र संविधान</u>**

२७. सरकारको महत्वपूर्ण काम संविधान निर्माणमा सहजीकरण गर्नु हो। यसको लागि आवश्यक स्रोतको व्यवस्था मिलाएको छु। शान्ति प्रक्रियाका बाँकी कामहरू यथाशीघ्र सम्पन्न गरिनेछ। राहत पाउन बाँकी द्वन्द्वपीडितहरूलाई राहत वितरणका लागि आवश्यक रकमको व्यवस्था गरेको छु।

२८. द्वन्द्वका क्रममा क्षतिग्रस्त भएका संरचनाहरूको पुनःनिर्माण, पुनःस्थापना र द्वन्द्व प्रभावित क्षेत्र विशेष कार्यक्रमका लागि रू. १ अर्ब ५९ करोड छुट्याएको छु।

२९. आगामी आर्थिक वर्षमा स्थानीय निकायहरूको निर्वाचन गराउनका लागि पर्याप्त रकमको प्रबन्ध गरेको छु।

३०. संविधान निर्माण एवं व्यवस्थापिकीय कार्यमा प्रभावकारिता ल्याउन भवन निर्माण कार्य शुरु गर्नुका साथै महिला सांसदहरूको सुरक्षा तथा आवास व्यवस्था गर्न आवश्यक बजेट व्यवस्था गरेको छु। व्यवस्थापिका-संसदका लागि रू. १ अर्ब २२ करोड विनियोजन गरेको छु।

३१. न्यायपालिकाको तेस्रो रणनीतिक योजना कार्यान्वयन गर्न सरकारले आवश्यक सहयोग गर्नेछ। सर्वोच्च अदालतको भवन निर्माणको प्रारम्भिक कार्यहरू अघि बढाइनेछ। न्यापालिकाका लागि रू. ३ अर्ब ४९ करोड विनियोजन गरेको छु।

३२. संवैधानिक निकायहरूको संस्थागत सुदृढीकरण र क्षमता अभिवृद्धिका लागि आवश्यक बजेटको व्यवस्था गरेको छु।

३३. विगत द्वन्द्वका क्रममा सरकारी स्वामित्वका बैंकहरूबाट ऋण लिई क्षति व्यहोरेका सहिद र पीडित परिवारलाई केही राहतको व्यवस्था गरेकोछु। रू. १० लाखसम्मको ऋण लिई सहिद भएका ऋणीहरुको सम्पूर्ण साँवा व्याज र शुल्क मिनाहा गर्ने व्यवस्था गरेको छु। बेपत्ता भएका ऋणीका परिवारहरुले साँवा रकम बुझाएमा बाँकी ब्याज, शुल्क तथा जरिवाना छूट दिने व्यवस्था गरेको छु। त्यस्तै रू. १० लाखसम्म ऋण लिई व्यवसाय शुरु गरेका तर व्यवसाय र क्षतिग्रस्त भएका वा ऋणीको मृत्यु भई व्यवसाय बन्द भएका ऋणीको हकमा बाँकी साँवा र साँवाको व्याजको २५ प्रतिशत रकम बुझाएमा बाँकी ब्याज, शुल्क, जरिवाना र पूंजीकृत व्याज मिनाहा गर्ने व्यवस्था मिलाएको छु। यो व्यवस्था २०६३ चैत्र मसान्त अगाडि लगानी भई भाखा नाघेका ऋणीको हकमा मात्र लागु हुनेछ।

३४. विपद् व्यवस्थापन तथा प्राकृतिक प्रकोप पुनःस्थापना, लागु औषध पुनःस्थापना र भूकम्प पीडित परिवारहरूको पुनःस्थापना र पुनःनिर्माणका लागि वजेट व्यवस्था गरेको छु।

३५. दीगो शान्तिका लागि आन्तरिक सुरक्षा अनिवार्य शर्त भएकाले शान्ति सुरक्षालाई प्रभावकारी बनाउन सुरक्षा निकायहरूको सुदृढीकरण र आधुनिकीकरण गरिनेछ। आन्तरिक सुरक्षा नीतिको प्रभावकारी कार्यान्वयन गरिनेछ। सहरी सुरक्षा प्रणालीलाई भरपर्दो र विश्वसनीय तुल्याउन काठमाडौं उपत्यका र अन्य शहरहरुका संवेदनशील क्षेत्रहरुमा क्लोज सर्किट टेलिभिजन प्रणाली जडान गरी अपराध अनुसन्धानलाई विद्युतीय प्रविधिमा आधारित बनाइनेछ।

३६. शान्ति सुरक्षाका कार्यक्रमहरूको प्रभावकारी कार्यान्वयनका लागि गृह मन्त्रालय अन्तर्गत रू. ३७ अर्ब ८ करोड विनियोजन गरेको छु।

## आर्थिक सुधारको श्रृंखला

३७. उच्च, दीगो र फराकिलो आर्थिक वृद्धिदर हासिल गर्न मुलुकलाई आकर्षक लगानी गन्तव्यस्थलको रुपमा विकास गर्नु जरूरी छ। आन्तरिक र बाह्य लगानी वृद्धि र सहजीकरणका लागि आगामी आर्थिक वर्षमा आर्थिक क्षेत्रमा विभिन्न सुधार गरिनेछ। सन् १९९० को दशकमा शुरु गरिएका उद्योग , वाणिज्य, ऊर्जा, बैंकिङ र वित्तीय क्षेत्र सम्बन्धी नीति , नियम र कानुनको अभ्यास र अनुभवको मूल्यांकन गरी थप सुधार र परिमार्जन गरिनेछ। आगामी आठ वर्षभित्र मुलुकलाई विकासशील बनाउने मार्गचित्र सहितको चौधौं आवधिक योजना र सन् २०३० सम्मको दीर्घकालीन विकास सोच तर्जुमा गरिनेछ।

३८. केही समयदेखि उद्योग व्यवसायीबाट माग हुँदै आएको आफ्नो सम्पति सम्बन्धी औपचारिक अभिलेख राख्ने एवं सो को यथार्थ मूल्याङ्कन गराउने व्यवस्थाका लागि सम्पति अभिलेखीकरण सम्बन्धी कानुन यथाशीघ्र तर्जुमा गरिनेछ।

३९. कम्पनी स्थापना, नवीकरण र खारेजी प्रक्रियालाई सरलीकृत गर्ने गरी कम्पनी ऐन, प्रतिस्पर्धा प्रवर्द्धन तथा बजार संरक्षण ऐन एवं दामासाही सम्बन्धी ऐनमा परिमार्जन गरिनेछ। स्वदेशी लगानीले अपुग हुने ठूला र कार्यान्वयनयोग्य क्षेत्रमा विदेशी लगानी भित्र्याउन विद्यमान ऋण तथा जमानत ऐनको प्रावधानलाई समयानुकूल बनाइनेछ।

४०. औद्योगिक व्यवसाय र विदेशी लगानी तथा प्रविधि हस्तान्तरण सम्बन्धी नयाँ कानुन तर्जुमा गरिनेछ। विदेशी लगानी नीति तथा औद्योगिक बौद्धिक सम्पत्ति नीति तर्जुमा गरिनेछ। विशेष आर्थिक क्षेत्र सम्बन्धी विधेयक व्यवस्थापिका-संसदमा प्रस्तुत गरिनेछ। विदेशी लगानीमा ठूला उद्योगहरू स्थापना गर्ने प्रक्रिया सरल बनाइनेछ। नेपालबाट सफ्टवेयर वा कुरियरबाट अन्य सामान निर्यात गरेमा अनलाइन भुक्तानी ल्याउन पाइने गरी कानुनी व्यवस्था मिलाइनेछ। श्रमिक र उद्योगी दुवैलाई सहज र लाभकारी हुने गरी नयाँ श्रम कानुन तर्जुमा गरिनेछ। रुग्ण उद्योग पुनःसञ्चालन र पुनर्व्यवस्थापनका लागि आवश्यक नीतिगत, कानूनी, संरचनागत र प्रक्रियागत व्यवस्था मिलाइनेछ।

४१. तुलनात्मक र प्रतिस्पर्धी लाभका वस्तुहरूको उत्पादन र निर्यात बढाउन वाणिज्य नीति र नेपाल व्यापार एकीकृत रणनीति , २०१० को पुनरावलोकन गरिनेछ। एक्काइसौं शताब्दीका परिवर्तनशील औद्योगिकरण प्रक्रिया अनुरुप नेपाललाई क्षेत्रीय र विश्व मूल्य श्रृंखलामा जोड्ने स्पष्ट रणनीति अवलम्बन गरिनेछ। आधुनिक सेवा क्षेत्रको जगमा नयाँ ज्ञानमा आधारित सेवा उद्योगहरू स्थापना र उत्पादनमूलक उद्योगहरूलाई टेवा दिने नीति लिइनेछ।

४२. नवीन विचार भएका तर लगानीयोग्य पूँजी स्रोत नभएका साना र मध्यम व्यवसायी, आविष्कारकर्ता तथा उद्यमीलाई शुरु पूँजी उपलब्ध गराई प्रोत्साहन गर्न एक कोष (Start Up Fund) खडा गरिनेछ। यो कोषमा नेपाल सरकारले रू. ५० करोडको बीऊ पूँजी राखी गैर आवासीय नेपाली र निजी क्षेत्रलाई समेत पूँजी लगाउन आव्हान गरिनेछ।

४३. एक अर्बभन्दा बढीको पूँजी लगानीमा स्थापना हुने उत्पादनमूलक उद्योग र दुई अर्बभन्दा बढीको पूँजी लगानीमा स्थापना हुने पर्यटन क्षेत्रसंग सम्बन्धित उद्योग तथा हवाई कम्पनीलाई कारोबार शुरु गरेको मितिले पाँच वर्षम्म पूर्ण रुपमा र त्यसपछिको तीन वर्षसम्म पचास प्रतिशत आयकर छुट हुने व्यवस्था मिलाएको छु ।

४४. ऊर्जा क्षेत्रमा रहेका नीतिगत र कानुनी व्यवधानहरू हटाउन विद्युत ऐन तथा नियमावलीमा संशोधन गरिनेछ। विद्युत नियमन आयोग कानुन तर्जुमा गरिनेछ।

४५. कृषि क्षेत्रलाई व्यावसायिक बनाउन करार खेती सम्बन्धी कानुन तर्जुमा गरी कार्यान्वयनमा ल्याइनेछ। कृषि उपजको भण्डारण र मूल्य स्थिरिकरणमा सघाउ पुर्यानउन सार्वजनिक गोदाम सम्बन्धी कानुन तर्जुमा गरिनेछ। भू-उपयोग नीति कार्यान्वयन गर्न भू-उपयोग कानुन तर्जुमा गरिनेछ। वन पैदावारको माग र आपूर्ति बीचको सन्तुलन कायम राखी वन पैदावारको सहज आपूर्तिको व्यवस्था मिलाउन कानुनी संरचना तयार गरिनेछ।

४६. ढुवानी तथा अन्य क्षेत्रमा कानुन विपरीत कार्टेलिङ तथा सिण्डिकेट प्रणालीलाई कडाइका साथ नियन्त्रण गरिनेछ। सिण्डिकेट प्रणाली सञ्चालन गर्ने संस्थाको दर्ता खारेज गरी सञ्चालकहरूलाई कालोसूचीमा राखिनेछ।

४७. सूचना प्रविधिको प्रयोगबाट सरकारी कार्य प्रक्रियालाई सरल बनाइनेछ। विभिन्न प्रयोजनका लागि एउटै कागज धेरै सरकारी कार्यालयमा बुझाउनुपर्ने झण्झटबाट सेवाग्राहीलाई मुक्त गरिनेछ।

४८. बजेट प्रस्तुति, विनियोजन र कार्यान्वयन पक्षलाई जिम्मेवार र उत्तरदायी बनाउन बजेट व्यवस्थापन तथा वित्तीय जवाफदेहिता सम्बन्धी कानुन तर्जुमा गरिनेछ।

४९. सार्वजनिक खरिद प्रक्रियालाई सरल बनाउन र बोलपत्र प्रथामा देखापरेका समस्या समाधान गर्न सार्वजनिक खरिद ऐन, २०६३ तथा नियमवाली, २०६४ मा संशोधन गरिनेछ। निर्माण व्यवसायीले आफूले गरेको निर्माणको कम्तीमा ५ वर्षको गुणस्तरीयता प्रत्याभूति दिनुपर्ने व्यवस्था गरिनेछ। निर्माण व्यवसायीको क्षमता अभिवृद्धि गरी प्रतिस्पर्धी बनाउन रू. २ करोडसम्मको निर्माण कार्यमा विशेष योग्यता आवश्यक नपर्ने व्यवस्था गर्न प्रचलित कानुनमा संशोधन गरिनेछ।

५०. सार्वजनिक हितका लागि जग्गा प्राप्त गर्नमा रहेका समस्या हल गर्न र घरजग्गा मूल्याङ्कनमा एकरुपता कायम गर्न एकीकृत कानुनको तर्जुमा गरिनेछ। कुनै पनि

बहानामा सार्वजनिक निर्माणमा अवरोध खडा गर्नेहरू विरुद्ध कानुनी कारवाही गरिनेछ। आयोजनाहरूको वातावरणीय प्रभाव मूल्याङ्कन कार्य शीघ्र सम्पन्न गर्ने गरी वातावरण संरक्षण ऐन र नियमावलीमा संशोधन गरिनेछ।

५१. आयोजनाहरूको अनुगमन र नियमन प्रभावकारी बनाइनेछ। निर्माणाधीन र सम्पन्न पूर्वाधारहरूको प्राविधिक परीक्षण गर्न राष्ट्रिय सतर्कता केन्द्र अन्तर्गत प्राविधिक परीक्षण प्रयोगशाला स्थापना गरी सो केन्द्रलाई क्षमतायुक्त बनाइनेछ। निर्माणको गुणस्तर कायम गर्न निर्माण व्यवसायी , प्राविधिक र अन्य सम्बन्धित पक्षलाई जिम्मेवार बनाइनेछ।

५२. मौद्रिक र वित्तीय क्षेत्रको स्थायित्व र संस्थागत सुशासन बढाउन तथा वित्तीय अपराध नियन्त्रण गर्न नेपाल राष्ट्र बैंक ऐन , २०५८, बैंक तथा वित्तीय संस्था सम्बन्धी ऐन, २०६३ र बैंकिङ कसुर सम्बन्धी ऐन , २०६४ का संशोधन विधेयकहरू व्यवस्थापिका-संसदको यसै अधिवेशनमा पेश गरिनेछ। विदेशी विनिमय नियमित गर्ने ऐन र विदेशमा लगानी गर्न प्रतिबन्ध लगाउने सम्बन्धी ऐन संशोधन गरिनेछ। बीमा ऐनमा सामयिक संशोधन गरिनेछ।

५३. बैंक तथा वित्तीय क्षेत्रमा स्वस्थ प्रतिस्पर्धालाई प्रोत्साहन गर्न विगत केही वर्षदेखि अघि बढाइएको बैंक तथा वित्तीय संस्थाहरू एक अर्कासंग गाभ्ने मर्जर तथा एक्विजिसन नीतिलाई निरन्तरता दिंदै बीमा कम्पनीहरूलाई समेत मर्जरमा जान प्रोत्साहित गरिनेछ। यस अघि मर्जरको सन्दर्भमा दिइएका छूट तथा सुविधालाई निरन्तरता दिइनेछ।

५४. सहकारी संस्थाहरूमा सुपरीवेक्षण र नियमन प्रभावकारी बनाउन कानुनी र संरचनागत व्यवस्था गरिनेछ। लघु वित्त कारोवार गर्ने संस्था एवं बचत तथा ऋण सहकारी संस्थाहरूको अनुगमन, सुपरीवेक्षण र नियमन कार्य प्रभावकारी बनाउन छुट्टै ऐनको तर्जुमा गरिनेछ। निक्षेप तथा कर्जा सुरक्षण विधेयक व्यवस्तापिका-संसदको यसै अधिवेशनमा पेश गरिनेछ।

५५. नेपालको पूँजी बजारमा गैर आवासीय नेपालीलाई प्रोत्साहित गर्न र लगानीका थप अवसर प्रदान गर्न गैर आवासीय नेपाली ऐन , २०६४ र गैर आवासीय नेपाली नियमावली, २०६६ लाई समयानुकूल बनाइनेछ। कमोडिटी बजारलाई व्यवस्थित गर्न यस सम्बन्धी कानुन तर्जुमा गरिनेछ।

<u>ऊर्जाः उज्यालो नेपाल समृद्ध नेपाल</u>

५६. "उज्यालो नेपाल समृद्ध नेपाल" अभियानका साथ सरकार आगामी तीन वर्षभित्र देशमा लोडसेडिङको अन्त्य गर्न प्रतिबद्ध छ। यस अवधिभित्र सार्वजनिक क्षेत्रमा माथिल्लो तामाकोशी, कुलेखानी तेस्रो , चमेलिया र माथिल्लो त्रिशुलीबाट कुल ५६० मेगावाट विद्युत उत्पादन हुनेछ भने निजी क्षेत्रबाट निर्माणाधीन ४२ वटा आयोजनाहरूबाट ६२८ मेगावाट विद्युत उत्पादन हुनेछ।

५७. माथिल्लो तामाकोशी जलविद्युत आयोजना सम्पन्न भएपछि वर्षायाममा निर्यातका लागि अतिरिक्त विद्युत उपलब्ध हुनेछ भने सुख्खा मौसममा बाह्य ऊर्जा बजारबाट खरिद गरिनेछ। खासगरी सुख्खा मौसममा लोड सेडिङलाई शून्यमा झार्न हाल निर्माणाधीन ढल्केवर-मुजफ्फरपुर लगायतका अन्तरदेशीय प्रसारण लाइनमार्फत विद्युत आयात निर्यात गर्ने व्यवस्था मिलाइनेछ।

५८. तनहुँ र राहुघाट जलविद्युत आयोजनाका साथै तामाकोशी पाँचौं, माडी खोला र मैवा खोला जलविद्युत आयोजनाहरूको निर्माण कार्य शुरु गरिनेछ। सार्वजनिक-निजी साझेदारीमा काबेली जलविद्युत आयोजनाको निर्माण शुरु गरिनेछ।

५९. लोड सेडिङलाई न्यून गर्न जलविद्युत मात्र पर्याप्त नहुने हुँदा अन्य नवीकरणीय ऊर्जाको उत्पादनको सम्भाव्यता हेरी सौर्य प्रविधिबाट उत्पादित विद्युतलाई प्रसारण लाइनमा जोडिनेछ। काठमाडौं उपत्यकाको लोडसेडिङ न्यूनीकरण गर्न आगामी आर्थिक वर्षभित्रै सम्पन्न गर्ने गरी २५ मेगावाट क्षमताको सौर्य ऊर्जा प्लाण्ट जडान गरिनेछ। अन्य सौर्य ऊर्जा आयोजनालाई पनि प्रोत्साहन गरिनेछ।

६०. काठमाडौं उपत्यका एवं अन्य सहरी क्षेत्रमा घरघरको छाना , धुरीमा सोलार प्यानल राखी आफ्नै लगानीमा एक किलोवाटभन्दा ठूला सौर्य प्रविधिबाट ऊर्जा

उत्पादन गर्ने व्यक्ति वा संस्थाको बचत विद्युत राष्ट्रिय प्रसारण लाइनमा जोडेमा नेपाल विद्युत प्राधिकरणले खरिद गर्नेछ। यसरी खरिद बिक्री हुने विद्युतको युनिट गणना गर्ने छुट्टै मिटर (Net Metering) को व्यवस्था गरी खूद महसूल मात्र भुक्तान गर्ने व्यवस्था मिलाइनेछ।

६१. आयोजनाहरू समयमा सम्पन्न गर्नका लागि आर्थिक वर्ष २०७९/८० सम्म विद्युत उत्पादन गरी राष्ट्रिय प्रसारण लाइनमा जोड्ने र निर्यात गर्ने विद्युत उत्पादकहरूलाई दश वर्षसम्म पूरै र त्यसपछि पाँच वर्ष ५० प्रतिशत आयकर छूट दिने व्यवस्था मिलाएको छु। यस्ता उत्पादकहरूले उत्पादित विद्युत राष्ट्रिय प्रसारण लाइनमा जोडेपछि प्रति मेगावाट रू. ५० लाखका दरले एकमुष्ट अनुदान दिने व्यवस्था मिलाएको छु। आर्थिक वर्ष २०७४/७५ सम्म विद्युत उत्पादन गरी राष्ट्रिय प्रसारण लाइनमा जोड्ने उत्पादकहरूलाई यस्तो अनुदानमा १० प्रतिशत थप गरिनेछ।

६२. नेपालभित्र अटोमोबाइल, कृषि औजार, सिमेण्ट अल्मुनियम, रासायनिक मल, सूचना प्रविधि तथा सोलार प्रविधि उद्योग स्थापना गर्ने स्वदेशी तथा विदेशी कम्पनीले आफ्नो उद्योगको खपतका लागि जलविद्युत उत्पादन गर्ने प्रस्ताव ल्याएमा त्यस्तो कम्पनीलाई जलविद्युत उत्पादन अनुमतिपत्र दिइनेछ र उद्योगको लागि खपत हुने विद्युतको रोयल्टी मिनाहा दिइनेछ। अनुमतिपत्रको अवधि ५० वर्ष कायम गर्ने व्यवस्था मिलाइनेछ।

६३. प्रसारण लाइन निर्माणमा देखा परेका जग्गा अधिग्रहण तथा वन क्षेत्र सम्वन्धी समस्या समाधान गर्न राष्ट्रिय योजना आयोगको संयोजनमा अधिकारसम्पन्न अन्तरनिकाय समन्वय संयन्त्र स्थापना गरिनेछ।

६४. निर्माणाधीन ३३ वटा १३२ के. भी. तथा अन्य प्रसारण लाइनहरूको निर्माण कार्यलाई प्राथमिकताका साथ अघि बढाइनेछ। निर्माणाधीन ढल्केवर-मुजफ्फरपुर ४०० के. भी. अन्तरदेशीय प्रसारण लाइनका साथै १३२ के. भी. क्षमताका बुटवल-कोहलपुर, कुशाहा-कटैया प्रसारण लाइनहरू र २२० के. भी. क्षमताको

खिम्ती-ढल्केवर प्रसारण लाइन निर्माण कार्य आगामी आर्थिक वर्षमा नै सम्पन्न गर्ने गरी पर्याप्त बजेट विनियोजन गरेको छु।

६५. कालीगण्डकी कोरिडोर र मर्स्याङ्दी कोरिडोर लगायतका ट्रान्समिसन लाइन आयोजनाहरुमा करिब रू. ४० अर्बको लगानीमा अन्तरदेशीय प्रसारण लाइनको निर्माण आगामी आर्थिक वर्षमा शुरु गरिनेछ।

६६. आगामी वर्ष ६३० मेगावाटको बूढीगण्डकी र ४१० मेगावाटको नलसिं गाड जलविद्युत आयोजनाको विस्तृत अध्ययन कार्य सम्पन्न गर्न रू. ८३ करोड विनियोजन गरेको छु।

६७. ३३५ मेगावाटको माथिल्लो अरुण, ५०० मेगावाटको सुनकोशी-३, १८० मेगावाटको आँधी खोला, ३०० मेगावाटको उत्तरगंगा र ३०० मेगावाटको दूधकोशी आयोजनाहरुका साथै पञ्चेश्वर, कर्णाली-चिसापानी, नौमुरे, आँधीखोला लगायतका बहुउद्देश्यीय जलविद्युत आयोजनाको अध्ययन कार्य सम्पन्न गरिनेछ। जुम्लामा ५ मेगावाट क्षमताको जलविद्युत आयोजनाको विस्तृत अध्ययन गरिनेछ।

६८. विद्युत उत्पादनमा ठूला लगानीकर्ताहरूलाई आकर्षित गर्न आकर्षक प्याकेज उपलब्ध गराइनेछ। लगानी बोर्डले अगाडि बढाएका ९०० मेगावाटको माथिल्लो कर्णाली, ९०० मेगावाटको अरुण तेस्रो, ६५० मेगावाटको तामाकोशी-३ र ६०० मेगावाटको माथिल्लो मर्स्याङ्दी-२ आयोजनाको वार्तालाई अन्तिम रुप दिई आयोजना विकास सम्झौता सम्पन्न गरिनेछ। पश्चिम सेती आयोजनालाई शीघ्र कार्यान्वयनमा लगिनेछ।

६९. आगामी तीन वर्षभित्र प्रसारण लाइन पुग्नसक्ने सबै स्थानमा विद्युतीकरण गरिनेछ। यो लक्ष्य हासिल गर्न ग्रामीण विद्युतीकरणका लागि यसै महिनामा उपलब्ध गराइएको रू. २ अर्बका अतिरिक्त आगामी वर्ष रू. १ अर्ब ५० करोड विनियोजन गरेको छु।

७०. विद्युत महसूलमा लागत अनुरुप समयानुकूल परिमार्जन गरिनेछ। नेपाल विद्युत प्राधिकरणलाई आगामी आर्थिक वर्षभित्रै विद्युत उत्पादन , प्रसारण र वितरणका तीन छुट्टाछुट्टै कम्पनीको रुपमा पुनर्संरचना गरिनेछ। प्रसारण इकाईलाई ऊर्जा व्यापार गर्न समेत सक्षम कम्पनीको रुपमा विकास गरिनेछ।

७१. लघु जलविद्युत आयोजना सञ्चालन गर्नका लागि इलेक्ट्रो मेकानिकल मेशिनरी सामाग्रीहरू आयोजनास्थलसम्म पुर्याउन अनुदानको व्यवस्था गरिनेछ। खानेपानी र सिंचाइका लागि सौर्य प्रविधि प्रयोगमा पूँजीगत अनुदान दिइनेछ। लघु तथा साना आयोजनाहरूबाट उत्पादित विद्युतलाई एकीकृत गर्न स्थानीय ग्रीड (Mini Grid) को स्थापना गरी क्रमशः केन्द्रीय प्रसारण लाइनमा जोडिनेछ।

७२. आगामी तीन वर्षभित्र हरेक घरलाई "धुवाँमुक्त उज्यालो घर" बनाउने कार्यक्रम ५० वाट पिक भन्दा ठूला क्षमताका १ लाख २५ हजार सौर्य विद्युत प्रणाली, ८ लाख सुधारिएको चूलो,१ हजार सौर्य कुकर/ड्रायर, २०० सौर्य सिंचाइ पम्प र ५० हजार घरायसी वायोग्याँस प्लान्ट प्रवर्द्धन गरिनेछ। सहरहरुमा सौर्य सडक बत्ती जडान गर्न वैकल्पिक ऊर्जा प्रवर्द्धन केन्द्र मार्फत अनुदानको व्यवस्था गरिनेछ। फोहरमैलाबाट ऊर्जा उत्पादन गर्ने सम्भाव्यताको अध्ययन गरिनेछ। ठूला औद्योगिक तथा व्यावसायिक प्रतिष्ठान, हाउजिङ, तथा अपार्टमेन्टहरूबाट निस्कने फोहरबाट सोही हाउजिङ र अपार्टमेन्टका लागि आवश्यक पर्ने विद्युत उत्पादन गर्न प्रोत्साहित गरिनेछ।

७३. विद्युत उत्पादनका लागि रू १२ अर्ब ६२ करोड विनियोजन गरेको छु। यसबाट आगामी वर्ष जलविद्युततर्फ २८ र सौर्य ऊर्जातर्फ २५ मेगावाट विद्युत केन्द्रीय ग्रीडमा थप भई कुल उत्पादन ८३३ मेगावाट पुग्नेछ।

७४. प्रसारण लाइन निर्माणका लागि रू. १३ अर्ब ५५ करोड छुटयाएको छु। यसबाट विद्यमान २६४० सर्किट कि.मी. विद्युत प्रसारण लाइनमा आगामी वर्ष ७५ कि.मी. थप भई २७१५ कि.मी. पुग्नेछ। अन्य ३३ के.भी. वितरण लाइनतर्फ आगामी वर्ष २०० कि.मी. थप भई ४४०० कि.मी. पुग्नेछ।

## कृषिको आधुनिकीकरण

७५. कृषि क्षेत्र अर्थतन्त्रको मेरुदण्ड एवं तुलनात्मक लाभ भएको क्षेत्र हो। यसको समग्र विकासका लागि कृषि दशक अन्तर्गत कृषि प्रणालीमा आधुनिकीकरण , विविधीकरण, व्यवसायिकरण र बजारीकरणको कार्यक्रम सञ्चालन गरिनेछ। सिंचाइ, विजुली, यातायात, मल, बीऊ, कृषि कर्जा लगायत कृषि सामाग्रीहरूको सहज आपूर्ति र वितरणलाई प्रभावकारी वनाइनेछ। प्रसार सेवा , तालीम, अनुसन्धान र विकासको लागि यस बजेटमा विशेष जोड दिइएको छ।

७६. बढ्दो बेरोजगारी र ग्रामीण क्षेत्रबाट युवाहरुको पलायन हुने समस्यालाई सम्बोधन गर्न र युवाहरुलाई कृषिमा आकर्षित गर्न ब्यवसायिक तरकारी , पशुपंक्षी पालन, जडिबुटी, तरकारी र फलफूल खेती , दुग्ध व्यवसाय, मत्स्य पालन, च्याउ खेती, जडिवुटी , कृषि भण्डारण , शीत भण्डारण, पशु वधशाला एवं मासुजन्य व्यवसायका लागि वाणिज्य बैंकबाट प्रदान गरिने ऋणको ब्याजदर अवदेखि ६ प्रतिशत नाघ्ने छैन। यसका लागि ४ प्रतिशतसम्म अनुदान दिने व्यवस्था मिलाएको छु। कृषि व्याज अनुदानका लागी रू. १ अर्व विनियोजन गरेको छु। लागत सहभागितामा सञ्चालन हुने यस्ता अन्य कार्यक्रमका लागि रू. ८७ करोड छुट्याएको छु। मासुजन्य उत्पादन वृद्धिका लागि साना किसान विकास बैंकमार्फत लगानी गर्न रू. १ अर्ब विनियोजन गरेको छु।

७७. पहाडमा १० हेक्टर र तराईमा २० हेक्टर जमीन एकत्रित गरी खेतीको व्यवसायीकरण तथा यान्त्रीकरण गर्ने निजी समुहलाई जग्गा विकास तथा यान्त्रीकरण गर्न लिएको ऋणको ब्याजमा ५० प्रतिशतसम्म र साना तथा सीमान्तकृत किसानहरूको सहकारीलाई ७५ प्रतिशतसम्म ब्याज अनुदानको व्यवस्था गरेको छु।

७८. कृषि, पशुपालन तथा मस्त्य उत्पादनलाई व्यवसायीकरण गर्न त्यस्ता व्यवसायमा प्रयोग हुने हाते ट्याक्टर, पावर टिलर, फिडर मेशिन, मिलिङ्ग मेशिन लगायतका विभिन्न उपकरणहरुमा १ प्रतिशत मात्र भन्सार महसुल लाग्ने व्यवस्था गरेको छु। साथै गाई

वा भैंसी पाल्ने पशु फार्मले पैठारी गर्ने एउटा ढुवानी साधनमा लाग्ने भन्सार महसुलमा पचास प्रतिशत छुट हुने व्यवस्था मिलाएको छु। यसैगरी मिल्किङ मेसिन तथा मासुजन्य पदार्थको ढुवानीमा प्रयोग हुने रेफ्रिजेरेटेड भ्यानको आयातमा पूरै भन्सार छूट गरेको छु।

७९. किसानहरूलाई उन्नत नश्ल उपलब्ध गराउन स्रोत केन्द्रहरूको विकास तथा गाईको बाच्छी मात्र उत्पादन हुने नश्ल उपलब्ध गराइनेछ। बीस वटा भन्दा बढी उन्नत नश्लका गाई सहित दुग्ध व्यवसाय गर्ने किसानले खरिद गर्ने मिल्किङ मेसिनको लागतको ५० प्रतिशत अनुदान दिइनेछ।

८०. चिया उद्योगलाई प्रोत्साहन गर्न यस्ता उद्योगले तिरेको मूल्य अभिवृद्धि करको ५० प्रतिशत छूट दिने व्यवस्था गरेको छु। चिया उत्पादन तथा प्रशोधन उद्योगहरुले चिया ढुवानीको लागि पैठारी गर्ने ढुवानीको साधनमा लाग्ने भन्सार महसूलमा पचास प्रतिशत छुट हुने व्यवस्था मिलाएको छु। सिटिसि चिया उद्योगका लागि चिया उत्पादक संघको सिफारिसमा अनुदानको मल उपलव्ध गराउने व्यवस्था गरेको छु।

८१. पशुपंक्षी तथा बाली बीमाको प्रिमियममा ७५ प्रतिशतसम्म अनुदान दिने व्यवस्था मिलाएको छु।

८२. आगामी वर्ष २ लाख ५५ हजार मेट्रिक टन रासायनिक मल अनुदानको व्यवस्था गरेको छु। यसको लागि रू. ५ अर्ब ४८ करोड विनियोजन गरेको छु। कृषक समूह सहकारीलाई भर्मिकम्पोष्ट लगायतका प्राङ्गारिक मल उत्पादन लागतमा ५० प्रतिशत अनुदान उपलब्ध गराउने व्यवस्था मिलाएको छु। विषादि तथा रासायनिक मल प्रयोग नगरी जैविक खेती गर्ने गाउँ विकास समितिहरूलाई कृषि क्षेत्रमा खर्च गर्न नियमित अनुदानमा २५ प्रतिशत थप गर्ने व्यवस्था गरिनेछ।

८३. कृषि अनुसन्धानलाई उत्पादन र उत्पादकत्व वृद्धितर्फ लक्षित गरिनेछ। कृषि अनुसन्धान कार्यक्रमलाई सुदृढ ग र्न रू. १ अर्ब ७८ करोड विनियोजन गरेको छु।

८४. कृषि क्षेत्रको विकास तथा ब्यवसायीकरणमा सहयोग पुर्या उन साना , मझौला र ठुला तथा ब्यवसायिक कृषकहरुको वर्गीकरण र मापदण्ड बनाई कृषकहरुलाई सेवा सुविधा उपलब्ध गराउनको लागि कृषक कार्डको ब्यवस्था गरिनेछ।

८५. निर्यातजन्य बाली तथा वस्तुको रुपमा पहिचान गरेका चिया, कफी, अलैंची, अदुवा, मह, मुसुरो, पश्मिना लगायतको गुणस्तरीय उत्पादन तथा प्रशोधन कार्यलाई विस्तार गरिनेछ।

८६. खाद्यान्न बालीको बीऊ प्रतिस्थापन दर बढाउँदै खाद्य सुरक्षामा सुधार ल्याउन लागत सहभागिताको आधारमा ७ हजार मेट्रिक टन उन्नत बीऊ उपलब्ध गराउन रू. १३ करोड विनियोजन गरेको छु।

८७. कृषि क्षेत्रमा कृषि विकास मन्त्रालयका तर्फबाट कार्यान्वयन गरिने कार्यक्रमहरूका लागि रू २३ अर्ब २८ करोड बजेट व्यवस्था गरेको छु।

**सिंचाई**

८८. निर्माणाधीन सिंचाइ आयोजनाहरूको निर्माण कार्यलाई तीब्रता दिइनेछ। पुराना सिंचाइ प्रणालीहरूको मर्मत सम्भार गरी सञ्चालनयोग्य बनाइनेछ। सम्भाव्य स्थानहरूमा लिफ्ट सिंचाइका लागि नवीकरणीय ऊर्जाको प्रयोगबाट कम्तीमा ५० हेक्टर जमीनमा सिंचाइ गर्ने किसानलाई ऋणको ब्याजमा ५० प्रतिशत अनुदान दिइनेछ।

८९. सिक्टा सिंचाइ आयोजना, बबई सिंचाइ आयोजना, महाकाली सिंचाइ आयोजना, र रानी जमरा कुलरिया सिंचाइ आयोजनाको मूल तथा शाखा नहर निर्माण र सिंचाइ प्रणालीको आधुनिकीकरण गर्ने कार्यलाई निरन्तरता दिइनेछ। भेरी बबई डाइभर्सन बहुउद्देश्यीय आयोजनाको सुरुङ्ग निर्माण कार्य प्रारम्भ गरिनेछ।

९०. कालीगण्डकी-तिनाउ र सुनकोशी डाइभर्सन वहुउद्देश्यीय आयोजनाको विस्तृत अध्ययनका साथै कन्काई नदी वहुउद्देश्यीय आयोजनाको अध्ययन गरिनेछ। सेती महाकाली सिंचाइ विकास कार्यक्रम र कर्णाली अञ्चल सिंचाइ विकास

कार्यक्रम अन्तर्गत सञ्चालित सिंचाइ आयोजनाहरूलाई थप बजेट सहित निरन्तरता दिएको छु।

९१. भूमिगत जलमा आधारित ५ हजार स्यालो ट्यूववेल र ३५ वटा डिप ट्यूबवेल जडान गरिनेछ। निर्माणाधीन ३५ वटा मझौला सिंचाइ आयोजनाहरू र अन्य ३० वटा आयोजनाको निर्माण कार्य सम्पन्न गरिनेछ।

९२. आवश्यक मर्मत सम्भारको अभावमा पूर्ण क्षमतामा सञ्चालन हुन नसकेका वृहत् सिंचाइ आयोजनाहरूको पुनरुत्थान गरी आगामी दुई वर्षभित्र थप ५० हजार हेक्टर जमीनमा सिंचाइ सुविधा पुर्याआइनेछ। नेपाल गण्डक पश्चिम नहर, चन्द्र नहर, कोशी पम्प, कोशी वितरण, कमला, नारायणी, नारायणी लिफ्ट र वाणगंगा सिंचाइ प्रणालीहरूको मर्मत र पुनरुत्थान कार्यलाई तीव्रता दिन रू. ४० करोड विनियोजन गरेको छु।

९३. सतह सिंचाइ तर्फ ४ हजार ५ सय हेक्टरमा थप सिंचाइ सुविधा उपलव्ध हुनेछ। यसका लागि रु १२ अर्व बजेट विनियोजन गरेको छु। सतह र भूमिगत सिंचाइको सम्भावना नभएका टार क्षेत्रमा नयाँ प्रविधिमा आधारित सिंचाइ प्रणालीको माध्यमबाट थप ६ सय हेक्टरमा सिंचाइ सुविधा उपलव्ध गराइनेछ। यसका लागि रू. २५ करोड बजेट व्यवस्था गरेको छु।

९४. जनताको तटबन्ध कार्यक्रम अन्तर्गत तराईका १४ वटा ठूला नदीहरुमा २५ किलोमीटर तटबन्ध निर्माण र ७ किलोमीटर तटबन्धको सबलीकरण गर्ने कार्य सम्पन्न हुनेछ। दार्चुला स्थित महाकाली नदी कटान तथा कर्णाली र बबई नदीको कटान नियन्त्रण र सो बाट भएको क्षतिको पुन :निर्माणका लागि बजेट व्यवस्था गरेको छु।

९५. जोखिमयुक्त जिल्ला सदरमुकाम वचाउ कार्यक्रम अन्तर्गत भद्रपुर, दुनै , चैनपुर। दिक्तेल र बेनी वचाउका लागि आवश्यक बजेट विनियोजन गरेको छु। कास्कीको अर्मला र नवलपरासीको सुस्ता क्षेत्र वचाउका लागि बजेट व्यवस्था गरेको छु।

९६. आगामी आर्थिक वर्षमा स्थानीय निकायबाट कार्यान्वयन गरिने साना तथा सामुदायिक सिंचाइ आयोजनाहरू समेत गरी सिंचाइतर्फ कुल रू. १८ अर्ब १० करोड विनियोजन गरेको छु।

**वन तथा भू संरक्षण**

९७. देशको कुल भू-भागको कम्तीमा ४० प्रतिशत वन क्षेत्र कायम गरी वनक्षेत्रलाई राष्ट्रिय समृद्धिको आधार बनाउन २०७१-८० को दशकलाई वन दशक घोषणा गरी "एक घर एक रुख , एक गाउँ एक वन , एक नगर अनेक उद्यान" कार्यक्रमलाई राष्ट्रिय अभियानका रुपमा सञ्चालन गरिनेछ। युवाहरुलाई यस कार्यमा सरिक गराउन वन संरक्षण स्वयंसेवक तयार गरिनेछ।

९८. बहुमूल्य जडीबुटीको संरक्षण, उत्पादन तथा व्यवस्थापनमा विशेष जोड दिइनेछ। कच्चा तथा प्रशोधन गरी निकासी गर्न सकिने वनस्पति तथा जडीबुटीमा थप अनुसन्धान गरी यिनको सारतत्व निर्यातलाई प्रवर्द्धन गर्न सरकार, सहकारी तथा निजी क्षेत्रको साझेदारीमा जडीबुटीको शित भण्डारण तथा प्रशोधन केन्द्र स्थापना गरिनेछ।

९९. निजी वन पैदावार प्रयोग, ओसार पसार कार्यविधिमा सरलता ल्याइनेछ। निजी जग्गामा रुख लगाउन प्रोत्साहन गरी ठूला चाक्ला क्षेत्रफलमा बृक्षरोपण गर्न चाहने व्यक्ति तथा समुहलाई सहयोगको व्यवस्था मिलाएको छु। निजी वन र कृषि वनको विकास तथा नर्सरी सञ्चालनमा अनुदानको व्यवस्था गरेको छु। औद्योगिक प्रतिष्ठानहरूले सम्झौता बमोजिम लगाउन बाँकी रुखहरूका लागि जमीन उपलब्ध गराइनेछ।

१००. वन पैदावारमा आधारित उद्योगलाई काष्ठ उद्योग, गैर-काष्ठ उद्योग र आर्थिक-वन उद्योगमा वर्गीकरण गरी कच्चा पदार्थ सरल र सहज रुपमा उपलब्ध गराउन विद्यमान नीतिगत तथा कानूनी व्यवस्थाको पुनरावलोकन गरिनेछ।

१०१. चुरे-तराई मधेश क्षेत्रको संरक्षणका लागि हालै गठन भएको राष्ट्रपति चुरे-तराई मधेश संरक्षण विकास समितिका लागि रू. ९० करोड बजेट विनियोजन गरेको

छ। आगामी वर्ष चुरे संरक्षणका लागि नदी वेसिन प्रणालीमा गुरुयोजना तर्जुमा गरी कार्यान्वयनमा ल्याइनेछ।

१०२. वन विकासको लागि कुल रू. ९ अर्ब ७८ करोड विनियोजन गरेको छु।

**<u>भूमिसुधार</u>**

१०३. भू-बनोट, क्षमता र उपयुक्तताको आधारमा भूमि र भूमिको स्रोतको दीगो उपयोग गर्ने नीति लिइनेछ। भूमि र भूमि स्रोतको अत्यधिक दोहनलाई नियन्त्रण गर्न समन्वयात्मक रुपमा कार्यक्रमहरु सञ्चालन गरिनेछन्। सरकारी सार्वजनिक र गुठी जग्गा संरक्षणका लागि निकायगत जिम्मेवारी स्पष्ट गरिनेछ। निश्चित योजना र लाभ लागतको विश्लेषण बिना स्थानीय निकायबाट कुनै पनि सार्वजनिक जग्गा , निजी वा अन्य प्रयोजनको भोगचलनको लागि उपलव्ध गराइने छैन।

१०४. भूमि व्यवस्थापनलाई आधुनिकीकरण गरी नवीनतम प्रविधिबाट भूमिको नाप नक्शांकनमा शुद्धता वृद्धि गरिनेछ। भूमि प्रशासनको गुणस्तर वृद्धि गर्न सूचना प्रविधिमा आधारित भू-सूचना प्रणालीको विकास र विस्तार गरिनेछ।

१०५. आवधिक कार्ययोजना बनाई सुकुम्बासी समस्या समाधान आयोगमार्फत भूमिहीन , सुकुम्बासी र अव्यवस्थित बसोबासीहरूको समस्यालाई सम्बोधन गरिनेछ। मुक्त कमैया र मुक्त हलिया परिवारको पुनःस्थापन कार्यलाई निरन्तरता दिइनेछ।

**<u>सहकारी</u>**

१०६. बचत तथा ऋणको कारोवार गर्ने सहकारी संघ संस्थाहरुबाट गरिने ऋण लगानीमा नेपाल राष्ट्र बैंकबाट स्वीकृति प्राप्त बैंक तथा वित्तीय संस्थाहरू सरह पाँच प्रतिशतसम्मको रकम खराब कर्जा जोखिम बहन गर्ने कोषको व्यवस्था गर्न अनिवार्य गराइनेछ।

१०७. सहकारी संस्थाहरूबाट प्रवाहित ऋणको सुरक्षणका लागि सहकारी बचत र ऋण सुरक्षण कोषको स्थापना गरिनेछ। बचत तथा ऋणको कारोवार गर्ने सहकारी

संस्थाहरुको प्रभावकारिता वृद्धि गर्न सहकारी तथा गरिबी अनुगमन सूचना प्रणाली स्थापना गर्न रू. ४ करोड विनियोजन गरेको छु।

१०८. सहकारीको विकास गरी रोजगारी अभिवृद्धि गर्न विभिन्न सहकारी संघसंस्थाहरुलाई बीऊ पूँजी अनुदान तथा शित भण्डार निर्माण गर्न पूँजीगत अनुदान उपलब्ध गराउन रू. ५ करोड विनियोजन गरेको छु।

<u>पूर्वाधार विकास</u>

१०९. पहुँच अभिवृद्धि, सेवा प्रवाहमा सहजीकरण र उत्पादन लागतमा कमी ल्याउने गरी भौतिक पूर्वाधारहरूको विकास गरिनेछ। वर्षभरि यातायातको सुविधा अभाव भएका प्रत्येक निर्वाचन क्षेत्रमा कम्तीमा एक सडक बहुवर्षीय ठेक्कामा कार्यान्वयन गर्ने गरी निर्माण गरिनेछ। डोल्पा र हुम्लामा आगामी दुई वर्षभित्र मोटरबाटो पुर्याइनेछ।

११०. आगामी छ महिनाभित्र विस्तृत परियोजना प्रतिवेदन तयार गरी काठमाडौं-तराई द्रुतमार्गको निर्माण कार्य यसै वर्ष शुरु गरिनेछ। स्वदेशी वा विदेशी लगानीकर्ताले निर्माण तथा सञ्चालनमा लगानी गर्न चाहेमा न्यूनतम सवारी साधन संख्याको सुनिश्चितता लगायतका सहुलियत दिइनेछ। निर्माण पूर्वका कार्यहरू सम्पन्न गर्न रू. २५ करोड विनियोजन गरेको छु।

१११. मध्यपहाडी लोकमार्गको कुल १७७६ किलोमीटर सडकको सम्पूर्ण ट्र्याक निर्माण कार्य आगामी वर्ष सम्पन्न हुनेछ। यो लोकमार्गको ६६ किलोमीटर कालोपत्रे, २० किलोमीटर ग्रावेल तथा २० वटा पुल आगामी वर्ष सम्पन्न हुनेछन्। यसका लागि रू. २ अर्ब विनियोजन गरेको छु।

११२. उत्तर दक्षिण लोकमार्गको कालीगण्डकी कोरिडोरको बाँकी २० किलोमीटर ट्र्याक खोल्ने कार्य सम्पन्न हुनेछ। कर्णाली कोरिडोरको लिमी-लाप्चा-सिमिकोट खण्डमा ३० किलोमीटर र हिल्सा-सिमिकोट खण्डमा ३५ किलोमीटर ट्र्याक खोलिनेछ। कोशी कोरिडोरको ६० किलोमीटर सडकको ट्र्याक र पाँचवटा पुल निर्माणको काम सम्पन्न हुनेछ। यस लोकमार्गका कोशी, कालीगण्डकी, कर्णाली,

सेती, महाकाली र भेरी कोरिडोरका लागि रू. १ अर्ब १८ करोड बजेट व्यवस्था गरेको छु।

११३. हुलाकी राजमार्गको ४० किलोमीटर सडक कालोपत्रे गरिनेछ। निर्माणाधीन १० वटा पुलहरुको निर्माण सम्पन्न गरिनेछ। यसका लागि रू. २ अर्ब छुट्याएको छु।

११४. लामोसांघु-तामाकोशी-जिरी सडक, शहिद मार्ग (घोराही-होलेरी खण्ड), लुम्बिनी बुद्धिष्ट सर्कीट, साँफेबगर-मार्तडी सडक, बर्दघाट-त्रिवेणी सडक, बालाजु-त्रिशुली सडक, छहरे-विदुर सडक, बल्खु-छैमले सडक, भक्तपुर-नगरकोट सडक र जनकपुर परिक्रमा सडक समेत ११ वटा सडकहरुको ७० किलोमीटर सडक स्तरोन्नति एवं कालोपत्रे गरिनेछ । यसका लागि रू. २ अर्ब ३९ करोड विनियोजन गरेको छु।

११५. काठमाडौं उपत्यका चक्रपथको कलंकी-कोटेश्वर खण्डको सडक ८ लेनमा विस्तार गर्ने कार्यलाई तीव्रता दिई कलंकी-बालाजु-कोटेश्वर खण्डको सडक क्षेत्र छुट्याउने काम गरिनेछ। यसका लागि रू. १ अर्ब १९ करोड विनियोजन गरेको छु।

११६. आगामी वर्ष काठमाडौं उपत्यकाभित्र थप ४१ किलोमीटर सडक विस्तार हुनेछ। धोबीखोला कोरिडोर सडक निर्माणको काम सम्पन्न हुनेछ। काठमाडौं उपत्यकाभित्रको सडक विस्तार, सुधार र मर्मतका लागि रू. १ अर्ब ८० करोड छुट्याएको छु।

११७. व्यापारिक मार्ग अन्तर्गत रानी-इटहरी-धरान सडक, बेल्हिया-बुटवल, बीरगञ्ज-पथलैया, जटही-जनकपुर खण्डलाई छ लेनमा विस्तार गर्ने कार्यका लागि रू. १ अर्ब विनियोजन गरेको छु।

११८. आगामी वर्ष सुर्खेत-जुम्ला सडक र शीतलपाटी-मुसिकोट सडकको १६० किलोमीटर सडक कालोपत्रे गर्न रू. २ अर्ब ४० करोड छुट्याएको छु।

११९. चैनपुर-खाँदवारी, हर्कपुर-ओखलढुङ्गा, ओखलढुङ्गा-सल्लेरी र नेपालगञ्ज-कोहलपुर सडकहरुको कुल ११२ किलोमीटर सडक कालोपत्रे गरिनेछ। यसका लागि रू. १ अर्ब १५ करोड छुट्याएको छु।

१२०. नदाहा-कोशीपुल-चतरा-रुपनगर, लेगुवाघाट-भोजपुर, हलेसी-दिक्तेल, मन्थली-रामेछाप र मेची पुल-विर्तामोड सडकहरुको कुल ४८ किलोमीटर सडक कालोपत्रे गरिनेछ।

१२१. नारायणघाट-मुग्लिङ सडकको स्तरोन्नति गरिनेछ भने मुग्लिङ-काठमाडौं सडक खण्डको सुधार सम्बन्धी विस्तृत सम्भाव्यता अध्ययन सम्पन्न गरिनेछ। यसका लागि रू. १ अर्ब १९ करोड बजेट विनियोजन गरेको छु।

१२२. आगामी वर्ष रणनीतिक र स्थानीय सडकहरूको नियमित, पटके , आवधिक र पुनःस्थापना र आकस्मिक गरी जम्मा १६ हजार ७ सय ८८ किलोमीटर सडक मर्मत सुधार गरिनेछ। ठूला सडकहरूको पुनःस्थापनाका लागि छुट्टै संयन्त्र खडा गरिनेछ। यी कार्यहरूका लागि रू. ४ अर्ब ५० करोड बजेट छुट्याएको छु।

१२३. सिमरा-बर्दिवास खण्डको रेलमार्ग निर्माणका लागि रू. १ अर्ब ३५ करोड छुट्याएको छु। ब्रोडगेजस्तरका निर्माणाधीन जयनगर-जनकपुर-वर्दिवास रेलमार्ग र कटहरी-बुधनगर रेलमार्गको जग्गा खरीद र रेलमार्ग क्षेत्र छुट्याउने कार्यका लागि रू. ६५ करोड बजेट छुट्याएको छु।

१२४. काठमाडौं उपत्यकाको सार्वजनिक यातायात सेवालाई सुरक्षित र गुणस्तरीय बनाउन विभिन्न स्तरमा ठूला र मझौला सडकहरुमा र्‍यापिड मास ट्रान्सपोर्ट अवधारणा लागू गरिनेछ। यसका लागि ४० भन्दा बढी सीट क्षमताका बस आयात गर्दा लाग्ने भन्सार महसूलमा निश्चित प्रतिशत छूट दिने व्यवस्था गरेको छु।

१२५. आगामी वर्ष रणनैतिक र स्थानीय सडकमा कुल १२५ वटा पुलको निर्माण सम्पन्न गरिनेछ। रणनीतिक पुल निर्माणका लागि रू. २ अर्ब ६० करोड र

स्थानीय सडक पुल निर्माणका लागि रू. ३ अर्ब १७ करोड तथा झोलुङ्गे पुलतर्फ रू. १ अर्ब ५३ करोड गरी कुल रू. ७ अर्ब ३०करोड विनियोजन गरेको छु।

१२६. आगामी वर्ष केन्द्रस्तरबाट निर्माण हुने सडकका लागि जम्मा रू. २६ अर्ब विनियोजन गरेको छु। यसबाट ५२५ किलोमीटर सडक कालोपत्रे हुने , ४९८ किलोमीटर ग्राभेल सडक निर्माण हुने र २२७ किलोमीटर नयाँ ट्र्याक खोल्ने कार्य सम्पन्न हुनेछ। त्यसैगरी स्थानीय स्तरमा निर्माण हुने सडकका लागि रू. ८ अर्ब ९६ करोड छुट्याएको छु। यसबाट ५० किलोमीटर सडक कालोपत्रे हुने , २०० किलोमीटर ग्राभेल सडक निर्माण हुने र ७७९ किलोमीटर कच्ची सडक निर्माण हुनेछन्।

## सहरी पूर्वाधार तथा खानेपानी

१२७. सुरक्षित, व्यवस्थित, किफायती र वातावरणमैत्री आवास प्रणाली विकास गर्न सरकारी, सहकारी र निजी आवास आयोजनाहरू कार्यान्वयनमा ल्याइनेछ। सार्वजनिक-निजी साझेदारीको अवधारणा अनुरुप सहरी पूर्वाधार विकासमा निजी क्षेत्रलाई आकर्षित गरिनेछ।

१२८. विराटनगर, वीरगञ्ज उपमहानगरपालिका तथा बुटवल, धरान, जनकपुर र नेपालगञ्ज नगरपालिकाहरूमा सहरी पूर्वाधार विकासका कार्यक्रम सञ्चालनका साथै आठवटा क्रमागत र नयाँ दुई गरी दश सहरी कोरिडोरहरूको विकास गरिनेछ।

१२९. बुटवलमा अन्तर्राष्ट्रिय सम्मेलन केन्द्रको निर्माण कार्य सम्पन्न गरिनेछ भने डोटी र टिकापुरमा क्षेत्रीयस्तरको सभाहलको निर्माणको कार्यलाई निरन्तरता दिइनेछ।

१३०. काठमाडौं उपत्यकाभित्रको विकासलाई एकीकृत र समन्वयात्मक ढङ्गमा अघि बढाइनेछ। काठमाडौ उपत्यकामा सहरी सडक विस्तार लगायतका कुनै पनि विकास निर्माणको कार्य काठमाडौं उपत्यका विकास प्राधिकरणको सिफारिसमा भौतिक पूर्वाधार समितिको निर्णयबाट मात्र गरिनेछ।

१३१. वागमती क्षेत्र भौतिक पूर्वाधार र सुधार, धोबीखोला सुधार र विराटनगर चक्रपथका लागि रू. ७७ करोड विनियोजन गरेको छु। वागमती सभ्यता बचाउ अभियान अन्तरगत यसको मुहान क्षेत्रमा बाँध निर्माणदेखि तल्लो तटीय क्षेत्रमा हरित क्षेत्र, तटबन्ध र चेकड्याम निर्माणका लागि रू. २७ करोड विनियोजन गरेको छु।

१३२. काठमाडौं उपत्यकामा रहेका सार्वजनिक जग्गा र सम्पतिको संरक्षण गर्नुका साथै आवश्यक जग्गा खरिद समेत गरी आगामी वर्ष कम्तीमा १० स्थानमा यथेष्ट खुला स्थान सहित उद्यान तथा पार्क निर्माण गरिनेछ। सबै नगरपालिकाहरूमा २५ हजार जनसंख्याका लागि एक खुला स्थान हुनुपर्ने नीति अवलम्बन गरिनेछ। यी कार्यमा पहल लिने नगरपालिकाहरूलाई पूँजीगत अनुदानको व्यवस्था गरिनेछ।

१३३. जलवायु परिवर्तनको असरले गर्दा पानीका स्रोतहरु दिनानुदिन सुक्ने क्रम जारी छ। यस अवस्थामा सुरक्षित र पर्याप्त खानेपानी सेवा उपलब्ध गराउन प्रयोग हुने पम्पिङ्ग प्रणालीमा विद्युतको डिमाण्ड शुल्क पूरै छुट दिने व्यवस्था मिलाएको छु।

१३४. सन् २०१७ सम्म सबै नेपाली जनतालाई आधारभूतस्तरको खानेपानी र सरसफाइ सुविधा उपलब्ध गराउने राष्ट्रिय लक्ष्य अनुरुप खानेपानी आयोजनाहरुको निर्माण, सुधार र विस्तारका कार्यक्रमहरु सञ्चालन गर्न रू. ५ अर्व ३ करोड बजेटको व्यवस्था गरेको छु।

१३५. विक्रम सम्वत् २०७३ बैशाख १ गतेसम्म मेलम्चीको पानी काठमाडौं उपत्यकामा वितरण गर्ने लक्ष्यका साथ मेलम्ची आयोजनाको निर्माण कार्य अगाडि बढाइनेछ। यसका लागि रू. ४ अर्व ६१ करोड विनियोजन गरेको छु।

१३६. तराई र पहाडका विभिन्न सुख्खा क्षेत्रमा बृहत पम्पिङ्ग प्रणालीका खानेपानी आयोजनाहरुको निर्माण कार्यलाई प्राथमिकता दिइनेछ। अन्य सुख्खा क्षेत्रहरुमा वर्षातको पानी संकलन र पुनर्भरण गर्न बाँध बाँधी इम्पाउण्डीङ्ग रिजर्वाएर बनाउने

कार्यको विस्तृत अध्ययन गरिनेछ। हरेक गाउँ विकास समितिलाई स्थानीय स्रोत परिचालन गरी सार्वजनिक पोखरीहरू निर्माण गर्न प्रोत्साहन गरिनेछ।

१३७. ललितपुरको गोदावरी र ठोस्ने खोलाका साथै भक्तपुरमा सतहगत स्रोत एवं वर्षातको पानी संकलन गर्न जलाशय निर्माण कार्य अघि बढाइनेछ।

१३८. फोहोर पानी ब्यवस्थापन गर्नको लागि गुह्येश्वरी र गोकर्णमा फोहोर पानी प्रशोधन केन्द्रको निर्माण कार्य शुरु गरिनुका साथै करीव २० किलोमिटर खोला किनाराको कोरिडोरमा ढल ओछ्याउने कार्य सम्पन्न गरिनेछ। यसका लागि रू. ८० करोड विनियोजन गरेको छु।

१३९. उच्च तथा मध्यमस्तरीय खानेपानी आयोजनाहरुको निर्माणलाई तीब्रता दिन र साना सहरी खानेपानी आयोजना कार्यान्वयन गर्न रू. २ अर्ब १५ करोड विनियोजन गरेको छु। ग्रामीण खानेपानी कार्यक्रम अन्तर्गत क्रमागत ३७८ र नयाँ २८९ गरी जम्मा ६६१ आयोजनाहरूमध्ये करिव ३४० आयोजना सम्पन्न हनेछन्। यसको लागि रू. १ अर्व ३२ करोड बजेट विनियोजन गरेको छु।

## स्थानीय विकास

१४०. बजेटको न्यायपूर्ण वितरण, निर्वाचन क्षेत्रको विकास निर्माणमा जनप्रतिनिधिको भूमिकाको सुनिश्चितता र साना आयोजनाका लागि पनि केन्द्रमा धाउनुपर्ने अवस्थाको अन्त्य गर्न माननीय सदस्यहरूले उठाउनुभएका आवाजको सम्मान गर्दै सम्बोधन गर्न बजेटमा विभिन्न व्यवस्था गरेको छु।

१४१. विभिन्न निकाय अन्तर्गत प्रत्येक निर्वाचन क्षेत्रमा न्यूनतम रू. ५ करोडको भौतिक पूर्वाधार निर्माण सुनिश्चित गरिनेछ। कुनै निर्वाचन क्षेत्रमा सो भन्दा कमका पूर्वाधार निर्माणका कार्यक्रमहरू रहेको पाइएमा आगामी आर्थिक वर्षमा नै थप बजेट उपलब्ध गराइनेछ। आगामी वर्षदेखि आफ्नो निर्वाचन क्षेत्रमा माननीय सदस्यहरूले छनौट गर्नुभएका पूर्वाधार आयोजनाहरू जनसहभागिताको आधारमा सञ्चालन गर्न निर्वाचन क्षेत्र विकास कार्यक्रम अन्तर्गत प्रत्येक निर्वाचन क्षेत्रका लागि प्रारम्भमा रू. १ करोड उपलब्ध गराउने व्यवस्था गरेको छु। यस

कार्यक्रमको प्रभावकारिताका आधारमा माननीय सदस्यहरूको भावना अनुरुप यो रकममा क्रमशः वृद्धि गर्दै लगिनेछ। निर्वाचन क्षेत्र विकासका लागि सबै सांसदहरूलाई उपलब्ध गराईँदै आएको रू. १० लाखमा रू. ५ लाख थप गरेको छु।

१४२. यसका अतिरिक्त भौतिक पूर्वाधार विकासका लागि विभिन्न शीर्षकमा जिल्ला विकास समितिमार्फत् खर्च गर्ने गरी विनियोजित रकम सबै निर्वाचन क्षेत्रमा समानुपातिक रुपमा वितरण गर्ने व्यवस्था मिलाइनेछ। यसको कार्यक्रम छनौट जिल्ला विकास समितिको निर्वाचन नहुञ्जेलसम्म सम्बन्धित क्षेत्रका सांसदले गर्ने व्यवस्था मिलाइनेछ। यसको कार्यान्वयन, अनुगमन तथा लेखापरीक्षण सम्बन्धी कार्यविधि संघीय मामिला तथा स्थानीय विकास मन्त्रालयले दुई महिनाभित्र तयार गर्नेछ।

१४३. स्थानीय स्तरमा निर्मित सडकहरुमा वर्षभरि नै आवतजावत सहज बनाउन झोलुङ्गेपुल एवं सडकपुल निर्माण कार्यलाई प्राथमिकताका साथ अघि बढाइनेछ। एक निर्वाचन क्षेत्र एक सडकपुल र एक जिल्ला एक राष्ट्रिय कार्यक्रम नीति लागु गरिनेछ।

१४४. सबै नगरपालिकाहरूमा नगर उद्यान निर्माणलाई अभियानको रुपमा अगाडि बढाई सहरी क्षेत्रको सार्वजनिक जमीन संरक्षण एवं वातावरण सुधारलाई उच्च प्राथमिकता दिइनेछ।

१४५. आदिवासी जनजाती राष्ट्रिय उत्थान प्रतिष्ठान, राष्ट्रिय दलित आयोग, राष्ट्रिय मुस्लिम आयोग, उपेक्षित उत्पिडित तथा दलित समुदाय उत्थान विकास समिति, बादी समुदाय उत्थान समिति र पिछडिएको समुदाय उत्थान विकास समिति लगायत समावेशी विकास प्रवर्द्धनका लागि गठित सबै आयोग प्रतिष्ठान तथा समितिका कार्यालयहरुलाई एउटै भवनमा ब्यवस्थित गर्न सुविधा सहितको बहुउद्देश्यीय समावेशी भवन निर्माण कार्यको थालनी गरिनेछ।

१४६. बैंकिङ प्रणाली मार्फत सामाजिक सुरक्षा भत्ता वितरण गर्ने कार्यलाई क्रमशः सबै जिल्लामा विस्तार गरिनेछ।

१४७. हालसम्म सडक सञ्जालमा नजोडिएका ८१५ गाउँ विकास समितिहरूमा सडक सुविधा पुर्याउने कार्यलाई प्राथमिकता दिइनेछ। यसका लागि रू. १ अर्व २० करोड विनियोजन गरेको छु। स्थानीय स्तरमा हालसम्म निर्मित करिव ५५ हजार किलोमिटर सडकलाई स्तरोन्नति गर्ने कार्यका लागि रू. २ अर्व २५ करोड बजेट व्यवस्था गरेको छु।

१४८. नेपाल सरकारले हालै गठन गरेका नयाँ नगरपालिकाहरु तथा नयाँ घोषणा हुने नगरपालिकाहरुको जनशक्ति व्यवस्थापन, कार्यालय भवन, सरसफाइ कार्यक्रम एवं आधारभूत पूर्वाधार निर्माणका लागि आवश्यक वजेट विनियोजन गरेको छु। नयाँ घोषणा भएका नगरपालिकाहरुमा नगर विकास योजना अनुरुप पूर्वाधार निर्माण गरिने नीतिगत ब्यवस्था गरेको छु।

१४९. अति विपन्न परिवारलाई लक्षित गरी शुरु गरिएको गरिबसंग विश्वेश्वर कार्यक्रमलाई व्यवस्थित संरचना र उपयुक्त जनशक्ति परिचालन गरी गरिवी निवारण कार्यक्रमको रुपमा सञ्चलनमा ल्याइनेछ।

<u>उद्योग तथा व्यापार</u>

१५०. विश्व बजारमा उपस्थिति जनाउन तथा तुलनात्मक र प्रतिस्पर्धी लाभका वस्तु उत्पादन गर्न एवं निर्यात प्रवर्द्धनका लागि उद्योग क्षेत्रको विकास अपरिहार्य छ। यसका लागि औद्योगिक क्षेत्रको पूर्वाधार विकासलाई यो बजेटले प्राथमिकतामा राखेको छ।

१५१. आगामी आर्थिक वर्षदेखि भैरहवा विशेष आर्थिक क्षेत्र सञ्चालनमा ल्याइनेछ। पाँचखाल विशेष आर्थिक क्षेत्र को गुरुयोजनासहित विस्तृत इञ्जिनियरिङ्ग डिजाइन नक्सा तयार गर्नुका साथै पहुँच सडक निर्माणको कार्य आरम्भ गरिनेछ। जुम्लामा विशेष आर्थिक क्षेत्र स्थापना का लागि पहुँच सडक र बाराको सिमरामा विशेष आर्थिक क्षेत्रका लागि पूर्वाधार निर्माणको कार्य अघि बढाइनेछ।

१५२. कञ्चनपुर र कैलाली लगायत देशका सम्भावित क्षेत्रमा थप औद्योगिक क्षेत्र स्थापना गरिनेछ। बुटवलको मोतीपुरमा तिनाउ औद्योगिक उपक्षेत्र स्थापनाका लागि विस्तृत इञ्जिनियरिङ्ग डिजाइन गरिनेछ।

१५३. आगामी वर्षमा १२ वटा सिमेन्ट उद्योगको लागि खानीस्थल पहुँच मार्ग तथा ८ वटा सिमेन्ट उद्योगका लागि विद्युत सबस्टेशन तथा प्रसारण लाइन निर्माण कार्यलाई निरन्तरता दिएको छु। उद्यमी स्वयंले पहुँच मार्ग निर्माण गर्न चाहेमा निश्चित मापदण्डका आधारमा अनुदान दिने प्रबन्ध मिलाइनेछ। पेट्रोलियम लगायत खनिज जन्य पदार्थ उत्खनन का लागि स्वदेशी तथा विदेशी लगानीकर्ताहरूलाई आकर्षित गरिनेछ।

१५४. जडिबुटी प्रशोधन व्यवसायलाई प्रवर्द्धन गर्न आगामी वर्ष अछाम, बैतडी, मुगु, बाजुरा र बझाङ्ग जिल्लामा पहुँच मार्ग सहित जडिबुटी केन्द्रहरू स्थापना गरी स्थानीय समुदायको सहभागितामा सञ्चालनमा ल्याइनेछ।

१५५. सुरक्षण मुद्रणालयको अभावमा सुरक्षण मुद्रणका लागि विदेश जानु पर्ने वाध्यताको अन्त्य गर्न निश्चित मापदण्ड पूरा गर्न सक्ने निजी क्षेत्रका मुद्रण उद्योगलाई सुरक्षण मुद्रणको अनुमति दिइनेछ।

१५६. एक गाउँ एक उत्पादन तथा एक जिल्ला एक उत्पादनका कार्यक्रमलाई विस्तार गरिनेछ।

१५७. निरन्तर रुपमा बढ्दै गएको कपडाको आयातलाई प्रतिस्थापन गर्न र कपडा उद्योगहरुलाई पुनःस्थापना गर्न मूल्य अभिवृद्धि करमा विशेष सहुलियतको व्यवस्था गरेको छु। स्वदेशी वस्तुहरू सरकारी निकायहरूले खरिद गर्दा प्रचलित वजार मूल्यभन्दा १५ प्रतिशतसम्म बढी भए पनि खरिद गर्नुपर्ने व्यवस्थालाई अनिवार्य गरी यसको कार्यान्वयनको अनुगमन गरिनेछ।

१५८. तेस्रो मुलुकको निर्यातमा दिइदै आएको निर्यात प्रोत्साहनलाई निरन्तरता दिएको छु। सिन्धुपाल्चोकको लार्चामा निर्माणाधीन सुख्खा वन्दरगाह आगामी वर्ष निर्माण सम्पन्न गरिनेछ। रसुवामा आन्तरिक कन्टेनर डिपोको निर्माण कार्य शुरु

गरिनेछ। सिन्धुपाल्चोकको बाह्रबिसेमा अन्तर्राष्ट्रियस्तरको प्रयोगशाला सहितको क्वारेन्टाइन स्थापना गरी नेपाली उत्पादन चीनमा सहज निर्यात गर्ने प्रबन्ध मिलाइनेछ।

१५९. काठमाडौंको चोभारमा अन्तर्राष्ट्रियस्तरको प्रदर्शनीस्थल र काठमाण्डौं प्रवेश गर्ने ढुवानी साधनहरुलाई व्यवस्थित गर्न आन्तरिक कन्टेनर डिपो निर्माणका लागि प्रारम्भिक कार्य गरिनेछ।

१६०. पेट्रोलियम पदार्थको आपूर्तिलाई सहज वनाउन रक्सौलदेखि अमलेखगञ्जसम्म पेट्रोलियम पाइपलाइन निर्माण कार्य आगामी आर्थिक वर्षमा शुरु गरिनेछ। पेट्रोलियम पदार्थको आपूर्ति र भण्डारणमा निजी क्षेत्रलाई संलग्न गराइनेछ। पेट्रोलियम पदार्थको कारोवारलाई व्यवस्थित गर्न र नियमनलाई प्रभावकारी वनाउन पेट्रोलियम पदार्थको कारोवार सम्बन्धी कानुन तर्जुमा गरिनेछ। काठमाडौं उपत्यकामा पेट्रोलियम पदार्थको भण्डारण क्षमता बढाइनेछ। पेट्रोलियम पदार्थ ढुवानी गर्ने ट्याङ्करहरूमा सुरक्षित सिल प्रणाली जडान गरी चुहावट नियन्त्रण गरिनेछ।

१६१. पेट्रोलियम पदार्थको अन्तर्राष्ट्रिय मूल्यमा हुने उतारचढावलाई समायोजन गर्न नेपाल आयल निगमको लागत साझेदारीमा मूल्य स्थिरिकरण कोष स्थापना गरिनेछ। यसका लागि सरकारले रू. ५० करोड राख्ने व्यवस्था मिलाएको छु। आगामी आर्थिक वर्षभित्रै काठमाडौं उपत्यकामा गुडने सरकारी सवारी साधनहरूले प्रयोग गर्ने पेट्रोलियम पदार्थमा १० प्रतिशत इथानोल मिसाउनुपर्ने अनिवार्य व्यवस्था गरिनेछ।

<u>वातावरण, विज्ञान तथा प्रविधि</u>

१६२. राष्ट्रिय तथा स्थानीय स्तरमा सञ्चालित जलवायु परिवर्तन व्यवस्थापन सहयोग कार्यक्रमलाई विस्तार गर्दै लगिनेछ। यसका लागि रू. ९३ करोड विनियोजन गरेको छु।

१६३. वातावरण प्रदूषण नियन्त्रण शुल्क वापत संकलन भएको रकमलाई वातावरण संरक्षणको क्षेत्रमा खर्च गर्ने गरी आवश्यक कार्यविधि बनाई उपयोग गरिनेछ।

१६४. जलवायु परिवर्तनबाट पर्ने असरलाई न्यूनीकरण गर्दै जल तथा मौसमजन्य प्रकोपबाट हुने क्षति कम गरिनेछ। मौसम पूर्वानुमानलाई भरपर्दो बनाइनेछ। मौसमी विवरणको सूचना सम्प्रेषण गर्ने गेज रिडरहरूको पारिश्रमिक वृद्धि गरेको छु।

१६५. सूचना प्रविधिको माध्यमबाट जनतामा आधारभूत सेवा प्रवाह गर्न राष्ट्रिय कार्ययोजना तयार गरी क्रमशः लागू गरिनेछ।

१६६. नेपाल सरकारका सबै सूचना तथा तथ्याङ्कहरू सुरक्षित रुपमा भण्डारण गर्नका लागि *सरकारी क्लाउड* स्थापना गरिनेछ। विदेशी लगानीकर्ताहरूले नेपालभित्र डाटा सेन्टर राख्न चाहेमा सो का लागि आवश्यक जग्गा उपलब्ध गराइनेछ।

१६७. सूचना प्रविधिको माध्यमबाट समाजको विकास, आर्थिक उन्नति र असल शासनको अभिवृद्धि गर्ने एवं नागरिकप्रति सार्वजनिक निकायलाई जवाफदेही, पारदर्शी र उत्तरदायी बनाउने नीति लिइनेछ।

## पर्यटन तथा नागरिक उड्डयन

१६८. सम्पूर्ण नेपाल नै पर्यटकीय सम्भावना भएको क्षेत्र हो। विश्व पर्यटन मानचित्रमा नेपाललाई आकर्षक, रमणीय र सुरक्षित गन्तव्यस्थलको रुपमा परिचित गराउँदै पर्यटकबाट अधिकतम लाभ लिन सक्नेगरी नेपाललाई आकर्षक गन्तव्यको रुपमा विकास गरिनेछ।

१६९. ताप्लेजुङ्गदेखि दार्चुलासम्मको उच्च पहाडी ग्रामीण पर्यटन मार्गलाई पर्यटन पूर्वाधार कार्यक्रम अन्तर्गत द ग्रेट हिमालयन ट्रेल अवधारणालाई प्राथमिकताका साथ अघि बढाइनेछ।

१७०. त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थललाई आधुनिकीकरण गरी सुविधा सम्पन्न बनाइनेछ। भैरहवास्थित गौतम बुद्ध क्षेत्रीय विमानस्थलको निर्माण कार्य अगाडि

बढाइनेछ। पोखरा विमानस्थलको लागि जग्गा प्राप्ति तथा आधारभूत पूर्वाधारको कार्य सम्पन्न गरी विमानस्थल निर्माण कार्य प्रारम्भ गरिनेछ।

१७१. बाराको निजगढमा दोस्रो अन्तर्राष्ट्रिय विमानस्थलको निर्माणका लागि आगामी वर्ष बस्ती स्थानान्तरण गरिनेछ। विमानस्थलको निर्माण पूर्वका चरणहरूका कार्य सम्पन्न गर्न रू. ५० करोड विनियोजन गरेको छु।

१७२. विराटनगर, नेपालगन्ज र धनगढी विमानस्थलहरूलाई सुविधासम्पन्न क्षेत्रीय विमानस्थलको रूपमा विकास गरिनेछ । जनकपुर , भद्रपुर र सुर्खेत विमानस्थललाई रात्रीकालीन अवतरणयोग्य बनाइनेछ। सुर्खेतको रामघाटमा विमानस्थलको विस्तृत सम्भाव्यता अध्ययन गरिनेछ। प्यूठानको चाल्नेटार र तेह्रथुमको चुहान डाँडामा विमानस्थल निर्माणको सम्भाव्यता अध्ययन गरिनेछ। राजविराज विमानस्थललाई सञ्चालनमा ल्याइनेछ। विमानस्थलहरूको निर्माण र सुधारको लागि रू. ७ अर्ब ८ करोड रकम विनियोजन गरेको छु।

१७३. हवाई सेवालाई राष्ट्रिय एवं अन्तर्राष्ट्रिय आवागमन र पहुँच बढाउन राष्ट्रिय ध्वजाबाहक नेपाल वायु सेवा निगमका विमानहरु थप गरी आगामी पाँच वर्षभित्र आन्तरिक उडानतर्फ १५ वटा र अन्तर्राष्ट्रिय उडानतर्फ ७ वटा नयाँ जहाज सञ्चालनमा ल्याइनेछ।

१७४. रारा ताल र अन्य महत्वपूर्ण ताल किनारामा सुविधासम्पन्न रिसोर्ट निर्माण गरी सञ्चालनमा ल्याउने पर्यटन व्यवसायीलाई १० वर्षसम्म शतप्रतिशत आयकर छुट दिइनेछ। पोखराको फेवातालमा म्यूजिकल वाटर फाउन्टेन निर्माणका लागि निजी क्षेत्रलाई आकर्षित गरिनेछ।

१७५. लुम्बिनी र पशुपति क्षेत्रको गुरुयोजनाको कार्यान्वयनमा तीब्रता दिइनेछ। वृहत्तर जनकपुर क्षेत्रको विकासको गुरुयोजना तयार पारी कार्यान्वयनमा ल्याइनेछ। अन्य महत्वपूर्ण धार्मिक-पर्यटकीय स्थलहरूको विकासमा प्राथमिकता दिइनेछ। चितवनको गर्दीमा रहेको ऐतिहासिक , पुरातात्विक, धार्मिक महत्वको बाल्मीकि आश्रमको गुरुयोजना आगामी वर्ष तयार गरिनेछ।

१७६. देशका मूर्त-अमूर्त सांस्कृतिक सम्पदाहरुको खोज, संरक्षण, संवर्द्धन गर्दै लगिनेछ। देशभरका धार्मिक स्थलहरुको सम्पत्तिको सुरक्षा , धार्मिक स्थलमा रहेको दोहोरो स्वामित्व समाप्त गरी सम्बन्धित संस्थाकै नाममा कायम गर्ने व्यवस्था मिलाएको छ। ठूला र ऐतिहासिक धार्मिक स्थलहरुमा ट्रष्टको निर्माण गरी सञ्चालन गरिनेछ।

१७७. राष्ट्रिय अभिलेखालयलाई आधुनिक, उपकरणयुक्त र सुरक्षित बनाई राष्ट्रको अमूल्य सम्पत्तिको रुपमा रहेका अभिलेखहरुलाई व्यवस्थित र संरक्षित गरिनेछ। देशका विभिन्न स्थानमा जाति, भाषा, धर्म र संस्कृति झल्काउने जातीय संग्रहालय निर्माणमा सहयोग पुर्यानइनेछ।

१७८. पर्यटन पूर्वाधारको विकास र संस्कृति प्रवर्द्धनका कार्यक्रमहरूका लागि रू. ३ अर्ब ९२ करोड बजेट छुट्याएको छु।

<u>सूचना तथा सञ्चार</u>

१७९. जनताको सुसूचित हुन पाउने हकलाई अझ बढी प्रभावकारी बनाउन सरकारी सञ्चार माध्यम रेडियो नेपाल र नेपाल टेलिभिजन गाभी सार्वजनिक सेवा प्रसारकका रुपमा सञ्चालन गर्न आवश्यक कानूनी र संस्थागत संरचना तयार गरिनेछ।

१८०. पत्रकारिताको व्यावसायिक विकासका लागि सञ्चार प्रशिक्षण प्रतिष्ठान स्थापना , पत्रकार दुर्घटना बीमाका लागि अक्षय कोष र द्वन्दपीडित कल्याणकोष स्थापनाका लागि बजेटको व्यवस्था गरेको छु।

१८१. सार्वजनिक-निजी साझेदारी अवधारणाका आधारमा मुलुकको ग्रामीण भेगमा ब्रोडव्याण्ड इण्टरनेट सेवाको पहुँच पुर्याइने जिल्ला सदरमुकाम जोड्ने गरी मध्य पहाडी लोकमार्गमा अप्टिकल फाइवर विच्छ्याउने कार्य शुरु गरिनेछ। बनेपा-वर्दिवास सडक खण्डमा अप्टिकल फाइवर विस्तार गर्ने र भवन सहितका ३० वटा सामुदायिक सूचना केन्द्र निर्माण कार्य सम्पन्न गरी इ-सेवाको पहुँच पुर्याईनेछ।

१८२. नेपाली चलचित्र क्षेत्रको समग्र विकासका लागि राष्ट्रिय चलचित्र नीति तर्जुमा गरी लागू गरिनेछ।

१८३. नेपाल टेलिभिजनको कोहलपुर प्रसारण केन्द्रबाट आगामी आ र्थिक वर्षमा प्रसारण थालनी गरिनेछ भने इटहरी प्रसारण केन्द्र भवन निर्माण गरी स्टुडियो स्थापना गरिनेछ। नेपाल टेलिभिजनको तेस्रो च्यानल बाट प्रसारण शुरु गरिनेछ। गोरखापत्रलाई समयसापेक्ष , प्रतिस्पर्धी र ग्राहकमैत्री बनाउन विराटनगरबाट क्षेत्रीय प्रकाशन गर्ने व्यवस्था मिलाइनेछ।

१८४. दूरसञ्चार क्षेत्रमा विकसित थ्री जी र फोर जी लगायतका नवीनतम प्रविधि सम्बन्धी सेवाहरु विकास र विस्तार गर्दै समग्र दूरसञ्चार सेवालाई गुणस्तरीय बनाइनेछ। नेपाल दूरसञ्चार कम्पनी लिमिटेड लाई थप प्रतिस्पर्धी बनाउन रणनीतिक साझेदार खोजिनेछ।

१८५. रेडियो नेपालको सेवालाई मुलुकका सबै जिल्लाहरुमा पुग्ने गरी विस्तार गरिनेछ। रेडियो नेपालका संस्थापक तारिणी प्रसाद कोइरालाको स्मृतिमा विराटनगरमा स्मृति ग्राम बनाइनेछ।

१८६. सूचना तथा सञ्चार क्षेत्रको विकासका लागि आगामी आर्थिक वर्षमा रू. ४ अर्ब १३ करोड खर्च गरिनेछ।

**<u>शिक्षा</u>**

१८७. विद्यालय शिक्षालाई प्रभावकारी र जीवनोपयोगी बनाउन तथा शिक्षामा पहुँच बढाउन शिक्षा ऐनमा संशोधन गरिनेछ।

१८८. सबैका लागि शिक्षा कार्यक्रम अन्तर्गत आगामी आर्थिक वर्षमा शिक्षालाई उच्च प्राथमिकतामा राखेको छु। साथै साधारण शिक्षालाई क्रमशः प्राविधिक र व्यावसयिक शिक्षातर्फ परिलक्षित गरिनेछ। "साक्षर नेपाल अभियान " लाई सफलतापूर्वक सम्पन्न गर्न आगामी वर्षलाई "निरक्षरता उन्मूलन वर्ष" को रुपमा

मनाइनेछ। साक्षरता कार्यक्रमका लागि रू. १ अर्ब ३९ करोड विनियोजन गरेको छु।

१८९. विद्यालय शिक्षालाई थप प्रभावकारी बनाउन कम विद्यार्थी संख्या भएका र निश्चित दूरी भन्दा कम दूरीमा रहेका विद्यालयहरूलाई र शिक्षक दरबन्दीलाई मिलान गरी एक अर्कामा गाभ्ने व्यवस्था मिलाइनेछ। आगामी आर्थिक वर्षमा कम्तीमा २ सयविद्यालयलाई गाभिनेछ।

१९०. विद्यालयहरूलाई निजी तथा सरकारी साझेदारीमा सञ्चालन गर्ने अवधारणा अगाडि बढाइनेछ। उपलब्ध पूर्वाधार र स्रोतमा नै साझेदारीमा विद्यालय सञ्चालन गरेमा सामुदायिक विद्यालयले पाएसरह सुविधा उपलब्ध गराइनेछ।

१९१. विद्यालय शिक्षाको गुणस्तर अभिवृद्धि गर्न माध्यमिक विद्यालयमा "एक विद्यालयः एक पुस्तकालय "" तथा "एक विद्यालय एक विज्ञान प्रयोगशाला " अवधारणा अनुसारका कार्यक्रम क्रमशः लागू गरिनेछ।

१९२. सामुदायिक विद्यालयबाट प्रथम श्रेणीमा प्रवेशिका परीक्षा उतीर्ण गर्ने निम्न आय भएका दलित, चेपाङ र राउटे समुदायका छात्रछात्रालाई उच्च माध्यमिक देखि स्नातकोत्तर सम्म अध्ययन गर्न रू. १ हजार ५ सय देखि रू. ३ हजारसम्म मासिक वृत्ति उपलब्ध गराउने व्यवस्था मिलाएको छु। दलितमध्ये पनि डोम , बादी, चमार र मुसहर जातिका व्यक्तिले इञ्जिनियरिङ वा चिकित्साशास्त्र तर्फ स्नातक तहमा अध्ययनका लागि लाग्ने सम्पूर्ण शैक्षिक खर्च सरकारले व्यहोर्ने व्यवस्था मिलाएको छु।

१९३. जेहेन्दार, अपाङ्ग, द्वन्द्वपीडित, मुक्त कमलरी, सीमान्तकृत, दलित विद्यार्थीहरुलाई छात्रवृत्ति उपलब्ध गराइनेछ। कर्णाली अञ्चल र वरिपरिका चौध जिल्लाका लागि सञ्चालन गरिंदै आएको दिवा खाजा कार्यक्रमलाई वादी , डोम, चमार, मुसहर, चेपाङ्ग, राउटे जस्ता संकटापन्न समुदायका बालबालिकासम्म विस्तार गरिनेछ।

१९४. तराई-मधेशका दलित, मुस्लिम र पिछडा वर्गका सरकारी विद्यालयमा अध्ययन छात्राहरूलाई विशेष प्रोत्साहन उपलब्ध गराइनेछ।

१९५. मुलुकभरका युवा जनशक्तिलाई उत्पादनशील र उद्यमशील बनाई देश विकासमा सहभागी बनाउन विभिन्न सीपमूलक तालिम प्रदान गरिनेछ। हाल माध्यमिक तहमा सञ्चालनमा रहेको प्राविधिक धारतर्फको शिक्षालाई प्रत्येक निर्वाचन क्षेत्रमा विस्तार गरिनेछ। उच्च माध्यमिक तहमा निजी क्षेत्रको सहकार्यमा समेत प्राविधिक शिक्षाको विस्तार गरिनेछ। प्राविधिक शिक्षा तथा व्यावसायिक तालिम परिषदलाई प्राविधिक तथा व्यावसायिक तालीमको प्रमाणीकरण समेत गर्ने निकायको रूपमा स्थापित गरिनेछ।

१९६. उच्च शिक्षालाई थप व्यवस्थित गर्न "उच्च शिक्षा नीति" कार्यान्वयनमा ल्याइनेछ। उच्च शिक्षाको प्रभावकारी व्यवस्थापन तथा गुणस्तर सुधारका लागि एकीकृत उच्च शि क्षा ऐन जारी गरिनेछ। उच्च माध्यमिक विद्यालयहरूमा २ हजार शिक्षकको दरबन्दी थप गरिनेछ।

१९७. विश्वविद्यालयहरूको सुसञ्चालनका लागि विश्वविद्यालय छाता कानुन ल्याइनेछ। खुला विश्वविद्यालयको स्थापना गरी उच्च शिक्षामा पहुँच वृद्धि गरिनेछ। विश्वविद्यालय शिक्षाको विकासका लागि विश्वविद्यालय अनुदान आयोगमार्फत् अनुदान उपलब्ध गराउन रू. ६ अर्ब ५२ करोड बजेट छुट्याएको छु।

१९८. शैक्षिक/शिक्षण संस्थाको पूर्वाधार विकासका लागि रू. ४ अर्ब ७४ करोड विनियोजन गरेको छु। यसबाट १ हजार २ सय ८५ वटा विद्यालय भवन , ९ वटा जिल्ला शिक्षा कार्यालय भवन, ३ हजार २ सय ३० वटा विद्यालय शौचालय र १३ वटा पोलिटेक्निक भवन निर्माण हुनेछन्।

१९९. शिक्षा क्षेत्रको समग्र विकासका लागि रू. ८६ अर्ब ३ करोड विनियोजन गरेको छु।

## स्वास्थ्य

२००. नयाँ स्वास्थ्य नीति कार्यान्वयनमा ल्याइनेछ। स्वास्थ्य संस्थाहरूको पूर्वाधारलाई आधुनिक किसिमले विकास गरिनेछ। सरकारी अस्पतालको क्षमता अभिवृद्धि गर्न निजी तथा सरकारी सहकार्यको अवधारणा ल्याइनेछ। वीर अस्पतालमा राष्ट्रप्रमुख,

सरकारप्रमुख लगायतका अति विशिष्ट र विशिष्ट पदाधिकारीका लागि सुविधासम्पन्न वार्डको व्यवस्था गरिनेछ।

२०१. स्थानीय आवश्यकता अनुसार अस्पताल तथा स्वास्थ्य केन्द्रहरुबाट चौबिसै घण्टा सरकारबाट तोकिएका निःशुल्क औषधि प्राप्त हुने व्यवस्था सुनिश्चित गरिनेछ। आगामी आर्थिक वर्षसम्ममा सम्पूर्ण उप-स्वास्थ्य चौकीहरुलाई स्वास्थ्य चौकीमा स्तरोन्नति गरिनेछ। आवश्यकता अनुसार अस्पताल तथा स्वास्थ्य केन्द्रहरुको स्तरोन्नति गरी पाँचवटा अञ्चल अस्पतालहरूमा आइसीयु र सबै अञ्चल अस्पतालहरूमा जेरियाट्रिक वार्डको स्थापना गरिनेछ।

२०२. स्वास्थ्य सेवालाई थप प्रभावकारी बनाउन विशेषज्ञ चिकित्सकहरूको दरबन्दी वृद्धि गर्दै लगिनेछ। प्राथमिक स्वास्थ्य केन्द्रमा रहने चिकित्सकको संख्या बढाइनेछ। दुर्गम तथा ग्रामीण क्षेत्रमा काम गर्ने चिकित्सकलाई निश्चित मापदण्ड बनाई नन् प्राक्टिस भत्ता उपलब्ध गराइनेछ।

२०३. रोगको रोकथाम, नियन्त्रण, निवारण र उन्मूलन गरी शिशु मृत्यु , बाल मृत्यु, मातृ मृत्यु दर घटाई नागरिकको स्वास्थ्य स्तरमा बृद्धि गर्न खोप सेवाको विकास , विस्तार र सुदृढीकरण गरिनेछ। खोपको लागि दीगो वित्तीय स्रोतको व्यवस्था गर्न खोप कोषको व्यवस्था मिलाएको छु।

२०४. आगामी वर्ष ५०० स्वास्थ्य चौकी , ३०० प्राथमिक स्वास्थ्य केन्द्र र अस्पतालहरुमा मृगौला रोगको पूर्व परीक्षण शुरु गरिनेछ। दक्ष स्वास्थ्यकर्मीबाट प्रसुती सेवा उपलब्ध गराइने नीति प्रवर्द्धन गर्न आगामी वर्षदेखि "मिड वाइफरी" शिक्षा शुरु गरिनेछ। महिला स्वास्थ्य स्वयंसेविकाहरुको यातायात खर्चलाई दोब्बर बनाई उनीहरूले पाउने पोशाक भत्ता बढाएर प्रतिव्यक्ति रू. ५ हजार पुर्या एको छु।

२०५. स्वास्थ्य क्षेत्रको समग्र विकासका लागि रू. ३३ अर्व ५२ करोड विनियोजन गरेको छु। यसबाट आगामी आर्थिक वर्षमा शिशु, बाल र मातृ मृत्युदरमा कमी आउने र नेपालीको औसत आयुमा वृद्धि हुने अपेक्षा गरेको छु।

**<u>युवा तथा खेलकुद</u>**

२०६. राष्ट्रिय युवा नीति, २०६६ मा उल्लेख भए अनुसार राष्ट्रिय युवा परिषद् गठनका लागि संरचनात्मक कार्य अघि बढाइनेछ। युवा विकासका लागि भिजन २०२५ तयार गरी कार्यक्रमहरु सञ्चालनमा ल्याइनेछ।

२०७. युवाहरूलाई देश निर्माणमा सरिक गराउन विभिन्न क्षेत्रमा युवा लक्षित कार्यक्रम अन्तर्गत रोजगारमूलक तथा उद्यमशीलता विकास तालिम प्रदान गर्नका लागि बजेट व्यवस्था गरेको छु।

२०८. आगामी तीन वर्षभित्र हरेक निर्वाचन क्षेत्रमा न्यूनतम एउटा खेलमैदान निर्माण गर्ने अभियान अन्तर्गत आगामी आर्थिक वर्षमा थप ५३ निर्वाचन क्षेत्रमा खेल मैदान निर्माण गरिनेछ।

२०९. क्रिकेट खेलमा हाल प्राप्त उपलब्धिलाई जगेर्ना गर्दै यसको विकासका लागि आगामी वर्ष काठमाडौंको मूलपानीको क्रिकेट मैदानमा अन्तर्राष्ट्रिय स्तरको प्यारापिट लगायतका पूर्वाधार निर्माण गरिनेछ। यसका लागि रू. २० करोड विनियोजन गरेको छु। भैरहवामा क्रिकेट मैदान निर्माण गर्नुका साथै अन्य सम्भाव्य स्थानहरुमा क्रिकेट मैदान निर्माणको कार्य शुरु गरिनेछ।

**<u>श्रम तथा रोजगार</u>**

२१०. युवा स्वरोजगारी बढाई आन्तरिक रोजगारीको प्रवर्द्धन गर्न व्यावसायिक तथा सीपमूलक र अभिमुखीकरण तालिमलाई थप प्रभावकारी बनाइनेछ। व्यावसायिक सीप तालीम प्रदान गर्ने संस्थाहरूका तालीमलाई हरेक निर्वाचन क्षेत्रका प्राविधिक विद्यालयसँग सहकार्य गर्दै राष्ट्रिय सीप परीक्षण समितिसँग आबद्ध गराई तालीमको गुणस्तरीयता कायम गरिनेछ।

२११. विभिन्न निकायहरूबाट प्रदान गरिने सीपमूलक तालीमहरूमा दोहोरोपना हटाई गुणस्तरीयता बढाउन र विस्तार गर्न राष्ट्रिय सीप विकास नीति तर्जुमा गरिनेछ।

२१२. सूचना प्रविधिको प्रयोग, संगठन संरचना र सेवा प्रवाहमा सुधार गरी वैदेशिक रोजगारीमा हुने ठगी नियन्त्रण गरिनेछ। विपदमा परेका नेपाली कामदारहरूलाई सहयोग र उद्धार गर्न विदेशस्थित नेपाली नियोगहरूका साथै गैर आवासीय नेपाली संघलाई समेत परिचालन गरिनेछ।

२१३. रोजगारदाता, रोजगार व्यक्ति र सरकारको संयुक्त लगानीमा श्रमिक बैंक स्थापना गर्न अध्ययन गरिनेछ।

**महिला सशक्तीकरण तथा लैङ्गिक समानता**

२१४. विभिन्न वर्ग र समुदायका महिलाहरूको आर्थिक स्रोत र साधनमा पहुँच बढाउन लक्षित महिला आर्थिक सशक्तीकरण अभियान देशव्यापी रुपमा सञ्चालन गरिनेछ। महिला विरुद्धको हिंसालाई निरुत्साहित गर्न र पीडितलाई न्याय दिलाउन सबै तहका अदालतमा द्रुत न्याय सेवाको थालनी गरिनेछ। हिंसापीडित महिला तथा किशोरीहरूलाई सुरक्षित र पुनर्स्थापना गर्न राष्ट्रियस्तरको मङ्गला-साहना पुनर्स्थापना केन्द्रको स्थापना गरिनेछ।

२१५. वादी, मुक्त कमलरी, मुक्त कमैया, चेपाङ्, राउटे तथा गन्धर्व समूहका किशोरी तथा महिलाहरुका लागि रोजगार कार्यक्रम सञ्चालन गरिनेछ।

**ज्येष्ठ नागरिक तथा अपाङ्गता**

२१६. ज्येष्ठ नागरिकहरुमा रहेका ज्ञान, सीप र अनुभवलाई नयाँ पुस्तामा हस्तान्तरण गर्न र ज्येष्ठ नागरिकहरुको एकाकीपनालाई सरल र रमणीय बनाउन दिवा सेवा केन्द्र तथा ज्येष्ठ नागिरक क्लबहरु निजी क्षेत्रको सहभागितामा विस्तार गरिनेछ। पशुपति क्षेत्रभित्रको वृद्धाश्रमलाई सुविधासम्पन्न बनाइनेछ।

२१७. अपाङ्गता भएका व्यक्तिहरुका लागि समुदायमा आधारित पुनःस्थापना कार्यक्रमलाई प्रभावकारी रुपमा सञ्चालन गरिनेछ। नयाँ बन्ने शिक्षा र स्वास्थ्यका संरचनाहरू अपाङ्गमैत्री बनाइनेछ।

## बालबालिका

२१८. जोखिममा रहेका बालबालिकाहरू आपतकालीन सेवा र उद्धारका लागि बाल हेल्पलाइन १०९८ र बालबालिका खोजतलास केन्द्र १०४ प्रभावकारी रुपमा सञ्चालन गर्न दुवै संयन्त्रलाई विस्तार गरी साधनसम्पन्न बनाइनेछ।

२१९. बालबालिका तथा किशोर किशोरी विरुद्ध हुने शोषण, दुर्व्यवहार तथा हिंसा नियन्त्रणका लागि विद्यमान दश वर्षे कार्ययोजनामा परिमार्जन गरी आवासीय बागगृहहरुलाई मापदण्ड अनुकूल सञ्चालन गर्ने व्यवस्था मिलाइनेछ। बाल बिज्याइमा परेका किशोर किशोरीहरुका लागि सुधार गृह मार्फत शिक्षा र सीप प्रदान गरी स्वनिर्भर बन्न प्रोत्साहन गरिनेछ।

## सामाजिक सुरक्षा

२२०. अन्य विकासशील देशको तुलनामा नेपालले सामाजिक सुरक्षामा बजेटको ठूलो हिस्सा खर्च गरेतापनि विभिन्न निकायमार्फत् छरिएर सञ्चालित भइरहेकोले प्रभावकारी हुन सकेको छैन। विभिन्न कार्यक्रमहरूमा देखिएको दोहोरोपना हटाउन र प्रतिफल लाभग्राहीसम्म पुर्यायउन  एकीकृत सामाजिक सुरक्षा विधेयक तर्जुमा गरी व्यवस्थापिका-संसदमा प्रस्तुत गरिनेछ।	सामाजिक सुरक्षा भत्ता वितरणलाई प्रभावकारी बनाउन राष्ट्रिय परिचयपत्र तयार नहुञ्जेल मतदाता परिचय पत्रलाई आधार मानिनेछ। सामाजिक सुरक्षा कोषको अभिलेख व्यवस्थापन र योगदानकर्ताको बायोमेट्रिक परिचयपत्र तयारी गरी विभिन्न सातवटा स्कीम सञ्चालन गरिनेछ।

२२१. दोस्रो जन आन्दोलनका घाइते तथा सहिद परिवारका लागि दिंइदै आएको मासिक भत्तामा वृद्धि गरी मासिक रू. ७ हजार पुर्याएको छु। परिचय पत्र लिएका अति अशक्तता भएका अपाङ्गहरूलाई मासिक रू. ३०० भत्ता दिने व्यवस्था गरेको छु।

२२२. स्थानीय निकायबाट ज्येष्ठ नागरिक , दलित ज्येष्ठ नागरिक, एकल महिला, अपाङ्ग, लोपोन्मुख जाति, बाल संरक्षणका लागि सामाजिक सुरक्षा भत्ता उपलब्ध गराउने

कार्यलाई निरन्तरता दिएको छ। सत्तरी वर्ष पुगेका ज्येष्ठ नागरिकहरूलाई हाल पाइरहेको भत्ताका अतिरिक्त दोहोरो नपर्ने गरी वार्षिक रू. २ हजार औषधोपचार खर्च उपलब्ध गराउने व्यवस्था मिलाएको छ।

२२३. विभिन्न ३९ रोगहरूको बीमा गर्न चालु आर्थिक वर्षदेखि शुरु गरिएको स्वास्थ्य बीमा कार्यक्रमलाई आगामी आर्थिक वर्षमा प्रत्येक विकास क्षेत्रको कम्तीमा तीन जिल्ला गरी पन्ध्र जिल्लामा विस्तार गरिनेछ। मुटु, क्यान्सर, मृगौला, पार्किन्सस, अल्जाइमर्स, स्पाइनल इञ्जुरी र हेड इञ्जुरी जस्ता रोगका लागि विपन्न नागरिक उपचार कोषबाट उपचार खर्च दिने व्यवस्था गरिएको छ।

२२४. स्वास्थ्य सेवालाई लक्षित वर्गसम्म पुर्या उन यस अन्तर्गत दुर्गम क्षेत्रका गर्भवती र सुत्केरी सेवा, कुष्ठरोगीलाई अनुदान, आमा सुरक्षा कार्यक्रम, शिशु न्यानो झोला कार्यक्रम, सामुदायिक अस्पतालमा निःशुल्क सेवा, एकीकृत महिला स्वास्थ्य तथा प्रजनन स्वास्थ्य कार्यक्रम तथा बाल स्वास्थ्य तथा पोषण कार्यक्रम सञ्चालन गरिनेछ। यस्तै आमा सुरक्षा कार्यक्रमलाई थप प्रभावकारी बनाइनेछ। महिलाको आङ खस्ने समस्याको उपचारमा प्रयोग हुने सिलिकन रिङ पेसरी निःशुल्क उपलब्ध गराइनेछ।

२२५. पन्ध्र वर्षमुनिका बालबालिका तथा ७५ वर्षमाथिका ज्येष्ठ नागरिकहरूको मुटुरोगको निशुल्क उपचारलाई निरन्तरता दिएको छ। बालसुधार गृह , बालकल्याण गृह , शिशुस्याहार केन्द्रमार्फत् बालकल्याण कार्यक्रमहरूलाई प्रभावकारी बनाइनेछ।

२२६. सम्पूर्ण गाउँ विकास समितिहरुका वडा तहसम्म महिला समूह गठन गरी महिला सशक्तीकरण र जागृति गर्ने कार्यलाई निरन्तरता दिइनेछ। महिला सामाजिक परिचालकहरूले पाउने मासिक भत्तामा रू. १ हजार ५ सयले वृद्धि गरेको छ।

२२७. विपन्न र सीमान्तकृत जनतालाई आवास सुविधा उपलब्ध गराउनका लागि जनता आवास कार्यक्रमलाई निरन्तरता दिएको छ। यस कार्यक्रम अन्तर्गत दलित ,

विपन्न मुसलमान, चेपाङ, वादी, कुसुन्डा, गन्धर्व, राजी, लोध जस्ता वर्गका लागि १ हजार ७ सय ६२ वटा जनता आवास निर्माण हुनेछन्।

२२८. आगामी वर्ष २५ जिल्लाका गरीब घरपरिवार पहिचान गर्ने कार्य सम्पन्न गरिनेछ।

२२९. गरिबी निवारणका कार्यक्रमहरूलाई लक्षित वर्गसम्म पुर्याइनेछ। आगामी वर्ष गरिबी निवारण कोषमार्फत २ हजार ३ सय ६० वटा आय आर्जन तथा ८ सय ५० वटा पूर्वाधार निर्माणका कार्यक्रमहरू सञ्चालन गरिनेछन्। यसबाट थप ६० हजार जनता लाभान्वित हुनेछन्। यस प्रयोजनका लागि रू. ३ अर्ब ६१ करोड विनियोजन गरेको छु।

२३०. राष्ट्रसेवक कर्मचारीहरूको निवृत्तिभरण तथा सामाजिक सुरक्षा अन्तर्गत विभिन्न निकायहरूबाट सञ्चालन हुने कार्यक्रमहरूका लागि कुल रू. ५५ अर्ब विनियोजन गरेको छु।

## सुशासन र सामान्य प्रशासन

२३१. भ्रष्टाचार विरुद्धको संयुक्त राष्ट्रसंघीय महासन्धि अनुसार कानूनहरु निर्माण गरी कार्यान्वयनमा ल्याइनेछ। भ्रष्टाचार विरुद्धको राष्ट्रिय नीति र कार्यान्वयनको अनुगमन तथा भ्रष्टाचार नियन्त्रण सम्बन्धी कार्यमा संलग्न विभिन्न निकायहरुबीचको समन्वय गर्न अख्तियार दुरुपयोग अनुसन्धान आयोगको नेतृत्वदायी भूमिका प्रवर्द्धनका लागि आवश्यक व्यवस्था गरिनेछ।

२३२. अपराधको बेसलाइन सर्वेक्षण सम्बन्धी कार्यक्रम सञ्चालन गरी नेपालमा अपराधको वास्तविक अवस्थावारे तथ्याङ्कीय जानकारी हासिल गरी अपराध न्यूनीकरणमा राज्यले अवलम्वन गर्नुपर्ने नीति र कार्यक्रमको खाका तयार गरिनेछ।

२३३. जनतालाई सुशासनको अनुभूति दिलाउन पारदर्शिता , जवाफदेहिता र उत्तरदायित्व अभिवृद्धि, दण्डहीनताको अन्त्य र कानुनी शासनको प्रत्याभूत गरिनेछ। सरकारी

सेवा वितरणलाई सरल , सहज र सुलभ बनाइनेछ। राष्ट्रिय परिचयपत्रलाई वायोमेट्रिक स्मार्ट कार्डको रुपमा वितरण गर्ने कार्य प्रारम्भ गरिनेछ।

२३४. हिरासत तथा कारागारमा रहेका बन्दी तथा कैदीहरूलाई न्यूनतम मानवोचित व्यवहार हुने गरी कारागारको सुधार गरिनेछ। कारागारहरुलाई सुधार गृहको रुपमा समेत विकसित गर्ने क्रममा आगामी वर्ष नुवाकोटमा केन्द्रीय कारागार र वाँकेको नौवस्तामा खुला कारागारको निर्माण कार्य प्रारम्भ गरिनेछ।

२३५. समग्र अध्यागमन प्रशासनको सुधारका लागि अध्यागमन आधुनिकीकरण योजना २०७० कार्यान्वयन गरिनेछ। अध्यागमन सेवालाई विद्युतीय प्रविधिमा आधारित बनाइनेछ।

२३६. सन् २०१५ मार्च भित्र सबै राहदानी मेशीन रिडेबल हुनुपर्ने भएकाले अनलाइन माध्यमबाट राहदानीको फाराम भर्ने व्यवस्था मिलाई राहदानी वितरण प्रक्रियालाई सरल बनाइनेछ।

२३७. विदेशस्थित नेपाली दूतावासहरूका लागि आगामी आर्थिक वर्षदेखि क्रमशः भवन खरिद र निर्माण गरिनेछ। यसका लागि बजेट व्यवस्था गरेको छु।

२३८. सरकारको वित्तीय दायित्वलाई पूर्णरुपमा लेखाङ्कन गर्न प्रतिबद्ध अभिलेख प्रणालीको शुरुवात गरिनेछ। सरकारी लेखा र प्रतिवेदन प्रणालीलाई विश्वसनीय र समयबद्ध बनाइनेछ। वित्तीय अनुशासनलाई सुनिश्चित गर्न लेखापरीक्षणलाई थप प्रभावकारी बनाइनेछ।

२३९. निजी क्षेत्रले अवलम्बन गरेका असल अभ्यासहरू (Best Practices) लाई सरकारी क्षेत्रबाट सहयोग पुर्यामउन र निजी क्षेत्रलाई सरकारी कार्य प्रक्रियाका बारेमा जानकारी गराउन सार्वजनिक निजी क्षेत्रका कर्मचारी तथा पदाधिकारीहरूलाई एक आपसमा इन्टर्नसीप गराउने व्यवस्था गरिनेछ। आगामी वर्ष ४०० सरकारी कर्मचारीहरूलाई निजी क्षेत्र सम्बन्धी तालीम प्रदान गरिनेछ।

२४०. राष्ट्रसेवक कर्मचारीहरूको मनोबल उच्च राख्दै उनीहरूलाई कामप्रति थप उत्प्रेरित गर्न सबै तह र श्रेणीका कर्मचारीहरूको शुरु तलबमानमा १० प्रतिशतले वृद्धि गरी समयानुकूल ग्रेड रकममा समेत वृद्धि गरेको छु। साथै, स्थानीय भत्तामा २५ प्रतिशत र फिल्ड भत्तामा ५० प्रतिशतले वृद्धि गरेको छु। उच्च हिमाली जिल्लाहरूमा कार्यरत कर्मचारीहरूलाई वार्षिक रू. १५ हजार पोशाक खर्च दिने व्यवस्था गरेको छु। राष्ट्रसेवक कर्मचारीहरूको वार्षिक तलब वृद्धिलाई शुरु तलबमानसँग आबद्ध गरी तलबमानलाई वैज्ञानिक बनाउन र अन्य सुविधालाई पुनरावलोकन गर्न एक उच्चस्तरीय तलब, सुविधा सुझाव आयोग गठन गरिनेछ।

<u>सुरक्षा</u>

२४१. सैनिक ऐन, २०६३ मा समसामयिक परिमार्जन गरिनेछ। नेपाली सेनालाई आवश्यक पर्ने वासस्थान तथा अन्य भौतिक पूर्वाधारका लागि यथोचित व्यवस्था गर्न बंकरबाट ब्यारेकसम्म योजनालाई अझ प्रभावकारी रुपमा निरन्तरता दिइनेछ। रक्षा मन्त्रालय अन्तर्गत रू. २८ अर्ब ८६ करोड विनियोजन गरेको छु।

२४२. पूर्वाधार विकासमा नेपाली सेनाको भूमिकालाई स्थापित गर्न हाल नेपाली सेनाद्वारा निर्माणाधीन सडकका अतिरिक्त मैलुङ-स्याप्रुवेशी सडक तथा कर्णाली कोरिडोरको खुलालु-सिमिकोट खण्डको सडक निर्माणको नेपाली सेनामार्फत् गरिनेछ।

<u>बैक तथा वित्तीय क्षेत्र</u>

माथि उल्लेख गरिएका सुधारका अतिरिक्त बैंकिङ तथा वित्तीय क्षेत्रमा निम्नलिखित सुधारहरू गरिनेछ।

२४३. आगामी वर्ष पाँचवटा ग्रामीण विकास बैकलाई गाभेर राष्ट्रिय स्तरको ग्रामीण विकास बैंक सञ्चालनमा ल्याइनेछ।

२४४. देशको कतिपय स्थानमा अझै पनि वाणिज्य बैंकहरुको सेवा पुग्न नसकेको सन्दर्भमा निश्चित मापदण्डका आधारमा विकास बैंक र वित्त कम्पनीहरूबाट जारी हुने ग्यारेन्टीला ई समेत सरकारी खरिदका लागि मान्यता दिइने व्यवस्था मिलाइनेछ।

२४५. नेपाल बैंक लिमिटेड र कृषि विकास बैंक लिमिटेडको बैंकिङ व्यवसायलाई अन्तर्राष्ट्रिय मापदण्ड अनुरूप बनाई प्रभावकारी रूपमा सञ्चालन गर्नका लागि सरकारी लगानीको हिस्साबाट विदेशी बैंकहरूलाई रणनीतिक साझेदारका रुपमा ल्याइनेछ।

२४६. नेपाल स्टक एक्सचेन्ज लिमिटेडको आधुनिकीकरण तथा व्यवसायीकरण गर्न र अन्तर्राष्ट्रिय रूपमा प्रतिस्पर्धी बनाउन स्वदेशी तथा विदेशी रणनीतिक साझेदार भित्र्याउन अध्ययन गरिनेछ। शे यर कारो वारलाई सरलीकृत गर्न नेपाल स्टक एक्स्चेन्चको कामलाई पूर्ण रूपमा अटोमेशनमा लगिनेछ।

२४७. कृषि, पशु तथा बाली संरक्षण लगायतको क्षेत्रमा बीमा कारोवारलाई विस्तार गरी ग्रामीण क्षेत्रसम्म बीमाको पहुँच पुर्याउन लघु बीमा सम्बन्धी नीति बनाई कार्यान्वयनमा ल्याइनेछ। हाल समुदायमा आधारित संस्थाहरूबाट भएका सुरक्षण कार्यक्रमहरूलाई विस्तार गरिनेछ।

२४८. बीमा कम्पनीहरूसँगको साझेदारीमा आकस्मिक बीमा कोषलाई रू. ५ अर्बको अधिकृत पूँजी रहने गरी पुनर्बीमा कम्पनीमा रुपान्तरण गरिनेछ।

**<u>सार्वजनिक संस्थान सुधार</u>**

२४९. बजारमा प्रतिस्पर्धा गर्न नसक्ने, निजी क्षेत्र आकर्षित नहुने र तलबभत्ता समेत ऋण लिएर वितरण गर्ने अवस्थामा पुगेका संस्थानका कर्मचारीहरुलाई पाउने सुविधा दिएर अवकाश (Pay-off) दिई विघटन गरिनेछ। विघटन सम्बन्धी प्रक्रियामा सरलीकरण गर्न कम्पनी ऐनमा आवश्यक संशोधन गरी लिक्विडेटर (Liquidator) को काम, कर्तव्य, अधिकार र दायित्वमा थप स्पष्टता ल्याइनेछ।

२५०. निजी क्षेत्र सक्षम भएको र सरकारले सञ्चालन गर्न आवश्यक नभएको क्षेत्रका संस्थानहरुलाई उपयुक्त विधि र तरिका अपनाई सार्वजनिक-निजी साझेदारी अवधारणा अन्तर्गत सञ्चालन गर्न दिइनेछ। निजीकरण ऐन, २०५० मा सामयिक संशोधन गरिनेछ। एउटै प्रकृतिको कार्य गर्ने संस्थानहरुलाई एकआपसमा गाभेर तिनीहरुको क्षमता वृद्धि तथा सञ्चालन खर्च न्यूनीकरण गरी व्यवस्थापन सुधार गरिनेछ।

सभामुख महोदय,

अब म माथिका क्षेत्रगत नीति तथा कार्यक्रमहरू कार्यान्वयनका लागि बजेट विनियोजन र स्रोतको व्यवस्थाको योजना प्रस्तुत गर्दछु।

२५१. आगामी आर्थिक वर्षका नीति तथा कार्यक्रमहरू कार्यान्वयन गर्न रू. ६ खर्ब १८ अर्ब १० करोड विनियोजन गरेको छु। कुल विनियोजनमध्ये चालुतर्फ रू. ३ खर्ब ९८ अर्ब ९५ करोड ११ लाख ९५ हजार अर्थात् ६४.५ प्रतिशत, पूँजीगततर्फ रू. १ खर्ब १६ अर्ब ७५ करोड ५० लाख ४२ हजार अर्थात् १८.९ प्रतिशत र वित्तीय व्यवस्थातर्फ रू. १ खर्ब २ अर्ब ३९ करोड ३७ लाख ६३ हजार अर्थात् १६.६ प्रतिशत रहेको छ। यो खर्च अनुमान चालु आर्थिक वर्षको विनियोजनको तुलनामा १९.५ प्रतिशत र संशोधित अनुमानको तुलनामा ३७.४ प्रतिशतले बढी हो।

२५२. आगामी आर्थिक वर्षका लागि अनुमान गरिएको खर्च व्यहोर्ने स्रोतमध्ये राजस्वबाट रू. ४ खर्ब २२ अर्ब ९० करोड, साँवा फिर्ता प्राप्तिबाट रू. १ अर्ब र वैदेशिक अनुदानबाट रू. ७३ अर्ब ३८ करोड ५९ लाख २४ हजार व्यहोर्दा रू. १ खर्ब २० अर्ब ८१ करोड ४० लाख ७६ हजार न्यून हुनेछ। सो न्यून पूर्ति गर्न वैदेशिक ऋणबाट रू. ४९ अर्ब ५२ करोड ८७ लाख ७० हजार जुटाइनेछ। राजस्व परिचालन र वैदेशिक सहायता परिचालन गर्दा खूद रू. ७१ अर्ब २८ करोड ५३ लाख ६ हजार न्यून हुन जानेछ। यो न्यून पूर्ति गर्न रू. ५२ अर्ब

७५ करोड आन्तरिक ऋणबाट र रू. १८ अर्ब ५३ करोड ५३ लाख ६ हजार चालु वर्षको नगद मौज्दातबाट व्यहोरिनेछ।

सभामुख महोदय,

अब म आर्थिक वर्ष २०७१/७२ को राजस्व सम्बन्धी नीति तथा व्यवस्थाहरू प्रस्तुत गर्दछु।

## आर्थिक वर्ष २०७१/७२ को राजस्व नीति

२५३. बढ्दो सार्वजनिक खर्चको आवश्यकता धान्ने गरी राजस्व प्रणालीलाई भरपर्दो बनाउन आगामी आर्थिक वर्षको राजस्व नीति देहायबमोजिम हुनेछ।

- नवीन चुनौतीहरु समेट्ने गरी कर संरचना एवं कर कानुनहरुको समयानुकूल सुधार गर्ने।
- आयात प्रतिस्थापनका साथै निर्यात प्रवर्द्धन गर्ने।
- अवैध व्यापार, राजस्व चुहावट, विदेशी मुद्रा अपचलन र सम्पत्ति शुद्धीकरणको नियन्त्रण गर्ने।
- प्रक्रियागत सरलीकरण र सूचना प्रविधिको माध्यमबाट स्वेच्छिक कर सहभागिता अभिवृद्धि गर्ने।
- अन्तर्राष्ट्रिय एवं क्षेत्रीय प्रतिबद्धता अनुरुप भन्सारका दरहरु क्रमशः समायोजन गर्दै लाने।
- गैर कर राजस्वलाई लागत प्रभावी र पारदर्शी बनाइने।
- राजस्व प्रशासनमा थप विशिष्टिकरण गर्न संरचनात्मक सुधार गर्ने।

२५४. उल्लिखित राजस्व नीतिहरु कार्यान्वयन गर्न निम्न बमोजिमका रणनीति तथा कार्यक्रमहरु कार्यान्वयनमा ल्याइनेछ -

### कर प्रणाली सुधार

- उच्चस्तरीय कर प्रणाली पुनरावलोकन आयोग गठन गरिनेछ।

- विश्व भन्सार संगठनबाट प्रतिपादित संशोधित क्योटो अभिसन्धी अनुरुप विद्यमान भन्सार ऐन नियममा आवश्यक संशोधन गरिनेछ।
- सबै सरकारी निकाय तथा सरकारी कोषबाट तलव, पारिश्रमिक लगायतका सेवा सुविधा प्राप्त गर्ने व्यक्ति, निकाय एवं पेशा व्यवसायीहरुले अनिवार्य रुपमा स्थायी लेखानम्वर लिनुपर्ने व्यवस्था गरिनेछ।
- सूचना प्रविधिमार्फत करदाताको कारोवारको अभिलेखमा कर प्रशासनको नियन्त्रण र पहुँच स्थापना गरिनेछ।
- मदिराजन्य वस्तुहरु अन्य उपभोग्य सामाग्री एकै स्थानबाट विक्रि वितरण गर्न नपाइने व्यवस्थालाई कडाइका साथ लागू गरिनेछ।
- राजस्व अनुसन्धान विभागको केन्द्रीय सूचना प्रणालीलाई वेभमा आधारित बनाई मालवस्तु ओसारपसार गर्ने ढुवानीकर्ताले मालवस्तुको विवरण सो सूचना प्रणालीमा घोषणा गरी ढुवानी गर्ने व्यवस्था मिलाइनेछ।
- सम्पत्ति शुद्धीकरणका विरुद्धमा अन्तर्राष्ट्रिय रुपमा गरिएका प्रतिवद्धताहरु क्रमशः कार्यान्वयन गर्दै लगिनेछ।
- राजस्व छुटको प्रभाव मूल्याङ्कन र गैर कर राजस्व प्रणाली सुधार कार्यदलले पेश गरेका सुझावहरुलाई क्रमशः कार्यान्वयन गर्दै लगिनेछ।
- आर्थिक ऐन मार्फत विभिन्न उद्योग तथा व्यवसायलाई आंशिक सुविधा दिई मूल्य अभिवृद्धि कर फिर्ता दिने व्यवस्था रहेकोमा त्यस्ता वस्तुहरुको उत्पादन प्रक्रिया, गुणस्तर, उपभोक्ता मूल्यमा परेको प्रभाव, त्यस्ता उद्योगहरुलाई कच्चा पदार्थ आपूर्ति गर्ने किसानहरुले प्राप्त गर्ने मूल्य स्थिति, बजार व्यवस्था लगायतका विषयमा अनुगमन समेतको कार्य गर्न वाणिज्य तथा आपूर्ति मन्त्रालय, उद्योग मन्त्रालय र आन्तरिक राजस्व विभागका पदाधिकारीहरु रहेको संयन्त्र निर्माण गरी नियमित रुपमा प्रतिवेदन लिने व्यवस्था मिलाइनेछ।
- मोवाइल सेटको गैर कानूनी आयात एवं प्रयोगलाई निरुत्साहित गर्न मोवाइलको स्तर निर्धारण गर्ने कार्यलाई थप प्रभावकारी बनाउन Equipment Identity Register System सम्बन्धी कार्यविधि तर्जुमा गरी कार्यान्वयनमा ल्याइनेछ।

## कर छूट र सहुलियत

- बिद्युतीय प्रणालीबाट कर भुक्तानी (इ-पेमेन्ट) गर्ने व्यवस्थाका लागि पूर्वाधार निर्माण गरिनेछ। करदाताहरूलाई कर सम्बन्धी सूचना विद्युत्तीय माध्यमबाट हेर्न सक्ने सुविधा उपलव्ध गराइनेछ।
- लगानी एवं प्रविधि हस्तान्तरणको सम्भावना भएका देशहरुसँग दोहोरो कर मुक्ति तथा वित्तीय छल निरोध सम्झौता गर्ने कार्यलाई अगाडि बढाइनेछ।
- व्यक्तिगत आयकर छूटको वर्तमान सीमा वृद्धि गरी व्यक्तिको लागि रू. २ लाख ५० हजार र दम्पतिको लागि रू. ३ लाख पुर्याएको छु।
- व्यापार सहजीकरणको लागि विद्यमान भन्सार जाँचपास प्रकृयाको सरलीकरण गर्न हाल प्रयोग भइरहेका कागजातको संख्या घटाइनेछ।
- भन्सारबाट जाँचपास भएका मालवस्तुहरु सिलवन्दी कन्टेनर मार्फत ढुवानी गर्ने व्यवस्था मिलाइने छ।
- तातोपानी नाकाबाट हुने तिब्बत निकासीलाई सरलीकरण गर्न त्रिभुवन बिमानस्थल भन्सार कार्यालयमा सीलछाप लगाई निकासी गर्ने व्यवस्था मिलाइनेछ।
- नेपाल आउने विदेशी नागरिकले ५ हजार अमेरिकी डलर वा सो सरहको परिवर्त्य विदेशी मुद्रा भन्दा बढी रकम साथमा लिई आएमा भन्सार विन्दुमा घोषणा गर्नुपर्ने हालको व्यवस्थालाई पुनरावलोकन गरिनेछ।
- निर्यात प्रवर्द्धन हुने गरी प्रक्रिया सरलीकरण गरेको छु।
- चिया उत्पादन तथा प्रशोधन गर्ने उद्योगहरुले चिया ढुवानीको लागि पैठारी गर्ने ढुवानीको साधनमा लाग्ने भन्सार महशुलमा पचास प्रतिशत छुट हुने व्यवस्था मिलाएको छु।
- वैदेशिक रोजगारमा गई कम्तीमा एक वर्ष काम गरी आउने नेपाली नागरिकले साथमा ल्याएको एउटा जुनसुकै प्रकारको ३२ इन्च सम्मको टेलिभिजनमा लाग्ने सम्पूर्ण कर महसुल छुट हुने व्यवस्था मिलाएको छु।

- पर्यटन एवं यातायात विकासका लागि केवुलकार निर्माण गर्ने उद्योगले पैठारी गर्ने केवुल, तयारी क्याव तथा क्याव निर्माण गर्न आवश्यक पर्ने स्टिल पातामा लाग्ने भन्सार महशुलमा पचास प्रतिशत छुट हुने व्यवस्था गरेको छु।
- विभिन्न क्षेत्रमा लगानी प्रवर्द्धनका लागि प्रस्ताव गरिएका छूट तथा सहुलियतहरू सम्बन्धित क्षेत्रमा नै उल्लेख गरेको छु।

<u>राजस्व प्रशासनमा सुधार</u>-

२५५. राजस्व परिचालनलाई थप प्रभावकारी बनाउन २०७१ श्रावण १ गते देखि बार्षिक रु. ५ करोडसम्म कारोवार गर्ने करदाताको सम्पूर्ण प्रशासन काठमाडौंस्थित करदाता सेवा कार्यालयहरु मार्फत गर्ने व्यवस्था मिलाइनेछ। आर्थिक कृयाकलापको विस्तार र करदाता संख्याको आधारमा थप कार्यालयहरुको विस्तार एवं विद्यमान करदाता सेवा कार्यालयहरुको स्तरोन्नति गरिनेछ।

२५६. राजस्व प्रशासन तालीम केन्द्रको भौतिक पूर्वाधार र संरचनात्मक सुधार गरी यसलाई अध्ययन, अनुसन्धान र अभिलेख केन्द्रको रुपमा पनि विकास गरिनेछ।

सम्माननीय सभामुख महोदय,

२५७. यो बजेटको कार्यान्वयनबाट आगामी आर्थिक वर्षमा ६ प्रतिशतको आर्थिक वृद्धि हुने अनुमान गरिएको छ। मुद्रास्फीति दर ८ प्रतिशतमा सीमित रहने अनुमान छ। साथै यस बजेटको कार्यान्वयनबाट भौतिक पूर्वाधार विस्तार हुने, निजी क्षेत्रको लगानी प्रवर्द्धन हुने, पूँजी बजारले गति लिने, सामाजिक न्याय एवं सुरक्षा अभिवृद्धि हुने वित्तीय सन्तुलन कायम हुने र समग्र अर्थतन्त्रमा सुधार आउने अपेक्षा गरेको छु।

२५८. यस बजेटको कार्यान्वयनको क्रममा मूल्य स्थिति लगायतका समष्टिगत आर्थिक परिसूचकहरूमा सकारात्मक प्रभाव पार्न नेपाल राष्ट्र बैंकले छिट्टै मौद्रिक नीति सार्वजनिक गर्नेछ।

२५९. आर्थिक वर्ष २०६९/७० को यथार्थ, २०७०/७१ को संशोधित अनुमान र आर्थिक वर्ष २०७१/७२ को अनुमानित आय व्ययको विवरण अनुसूचीहरूमा प्रस्तुत गरेको छु। विकास साझेदारहरूबाट प्राप्त हुने सहायता सम्बन्धी पुस्तिका छुट्टै प्रस्तुत गरेको छु।

२६०. यो बजेटको कार्यान्वयनबाट प्राप्त हुने महत्वपूर्ण उपलब्धिहरूका अनुगमन सूचकहरूलाई छुट्टै अनुसूचीमा उल्लेख गरेको छु।

२६१. संक्रमणबाट गुज्रिरहेको आजको नेपाल एकातिर लोकतान्त्रिक संघीय गणतान्त्रिक संविधानको प्रतीक्षामा छ भने अर्कातिर द्रुततर आर्थिक विकासको आकांक्षी छ। अब हाम्रो संकल्प यिनै उद्देश्य पूरा गर्नका लागि हुनुपर्दछ। आर्थिक समुन्नतिको महान यात्रामा समर्पित हुनुको हामीसँग विकल्प छैन। यसका लागि समग्र देशवासीको परिश्रम, ऊर्जा, उद्यमशीलता र सिर्जनात्मक प्रतिभाको मूल फुट्नु आवश्यक छ। यो बजेटले यस दिशामा केही योगदान पुर्याउन सक्नेछ भन्ने आशा राखेको छु।

२६२. बजेट तर्जुमामा सम्माननीय राष्ट्रपतिज्यूबाट प्राप्त मार्गदर्शन र प्रेरणाका लागि हार्दिक कृतज्ञता व्यक्त गर्दछु। बजेट निर्माणमा सम्माननीय प्रधानमन्त्रीज्यूबाट प्राप्त निर्देशनका लागि आभार प्रकट गर्दछु। व्यवस्थापिका-संसदका माननीय सदस्यहरूले बजेट पूर्वको छलफलका क्रममा दिनुभएका सुझावप्रति आभारी छु। त्यसैगरी करदाता, व्यवसायिक तथा पेशागत संघसंस्था, सञ्चार जगत्, नागरिक समाज, बुद्धिजीवी, अर्थशास्त्री, राष्ट्रसेवक कर्मचारी सबैलाई धन्यवाद दिन्छु। नेपालको आर्थिक सामाजिक विकासमा निरन्तर सहयोग पुर्याउँदै आएका विकास साझेदारहरूलाई धन्यवाद दिन्छु। यो बजेटको कार्यान्वयनमा सबै क्षेत्रको सहयोगको अपेक्षा राखेको छु।

धन्यवाद ! जय नेपाल !

# आय व्ययको विवरण

अनुसूची -१

## आर्थिक बर्ष २०७१/७२

(रू. हजारमा)

| शीर्षक | २०६९/७० को यथार्थ | २०७०/७१ को संशोधित अनुमान | २०७१/७२ को अनुमान | स्रोत | | |
|---|---|---|---|---|---|---|
| | | | | नेपाल सरकार | वैदेशिक | |
| | | | | | अनुदान | ऋण |
| **राजस्व तथा अनुदान** | **३,३३,१७,२१,५१** | **४,०१,८४,०४,७८** | **५,१४,८२,१२,३०** | **४,४१,४३,५३,०६** | **७३,३८,५९,२४** | |
| **राजस्व** | **२,९७,९४,२३,४६** | **३,५४,५२,९४,३०** | **४,४१,४३,५३,०६** | **४,४१,४३,५३,०६** | | |
| कर | २,५९,२१,४९,३७ | ३,१२,६२,१५,९९ | ३,७४,७०,५९,९८ | ३,७४,७०,५९,९८ | | |
| अन्य राजस्व | ३६,८०,६२,१७ | ४१,९०,७८,३१ | ४८,१९,४०,०२ | ४८,१९,४०,०२ | | |
| गत वर्षको नगद मौज्दात तथा बेरुजू | १,९२,११,९२ | ० | १८,५३,५३,०६ | १८,५३,५३,०६ | | |
| **अनुदान** | **३५,२२,९८,०५** | **४७,३१,१०,४८** | **७३,३८,५९,२४** | **०** | **७३,३८,५९,२४** | |
| वैदेशिक अनुदान | ३५,२२,९८,०५ | ४७,३१,१०,४८ | ७३,३८,५९,२४ | ० | ७३,३८,५९,२४ | |
| **खर्च** | **३,०२,०५,३८,९७** | **३,८०,५१,०३,३५** | **५,१५,७०,६२,३७** | **४,२०,६३,६९,७२** | **७०,१४,३३,१६** | **२४,९२,५९,४९** |
| **चालु खर्च** | **२,४७,४५,५४,७२** | **३,१६,६४,००,७९** | **३,९८,९५,११,९५** | **३,४८,७६,६६,३८** | **४५,८८,०८,९७** | **४,३०,३६,६०** |
| पारिश्रमिक / सुविधा | ६६,०४,६०,६९ | ८४,२६,०३,७३ | १,०४,९१,२४,६१ | १,०४,७२,५७,९० | १७,४२,३४ | १,२४,३७ |
| मालसामान तथा सेवाको उपयोग | २३,२८,५२,६४ | २९,००,८५,७८ | ६३,१०,६२,३० | ४६,६१,६७,२७ | १५,३०,८६,९९ | १,१८,०८,०४ |
| व्याज र सेवा  खर्च | १३,७३,६६,९८ | १७,५४,७७,१५ | २३,३५,४५,७३ | २३,३५,४५,७३ | | |
| सहायता (सब्सीडी) | ४,२२,७३,३९ | १,१५,४४,१२ | २,६१,५१,६२ | १,४४,४१,२४ | १,१७,१०,३८ | |
| अनुदान (ग्रान्ट्स) | १,०२,४८,९८,८७ | १,४२,३२,८८,७८ | १,४६,३४,९६,०३ | १,१६,२१,४९,३६ | २७,१६,२८,४० | २,९७,१८,२७ |
| सामाजिक सुरक्षा | ३७,५४,४२,५१ | ४२,०४,८७,२९ | ५८,२४,३७,७७ | ५६,०४,१०,९९ | २,०६,४०,८६ | १३,८५,९२ |
| अन्य खर्च | १२,५९,६४ | २९,१३,९४ | ३६,९३,८९ | ३६,९३,८९ | | |
| **पूंजीगत खर्च** | **५४,५९,८४,२५** | **६३,८७,०२,५६** | **१,१६,७५,५०,४२** | **७१,८७,०३,३४** | **२४,२६,२४,१९** | **२०,६२,२२,८९** |
| पूंजीगत खर्च | ५४,५९,८४,२५ | ६३,८७,०२,५६ | १,१६,७५,५०,४२ | ७१,८७,०३,३४ | २४,२६,२४,१९ | २०,६२,२२,८९ |
| **बजेट बचत (-) न्यून (+)** | **-३१,११,८२,५४** | **-२१,३३,०१,४३** | **८८,५०,०७** | **-२०,७९,८३,३४** | **-३,२४,२६,०८** | **२४,९२,५९,४९** |
| **वित्तीय व्यवस्था** | **२४,८१,६४,७७** | **-३,८४,७३,६४** | **-८८,५०,०७** | **२०,७९,८३,३४** | **३,२४,२६,०८** | **-२४,९२,५९,४९** |
| **खूद ऋण लगानी** | **११,७९,६७,९२** | **१३,०५,५६,७१** | **३४,६७,८५,७१** | **१३,७५,३२,५०** | **७३,२५,००** | **२०,१९,२८,२१** |
| आन्तरिक ऋण लगानी | १२,५५,२०,९९ | १८,५५,५६,७१ | ३५,६७,८५,७१ | १४,७५,३२,५० | ७३,२५,०० | २०,१९,२८,२१ |
| आन्तरिक ऋण लगानी फिर्ता(घटाउने ) | ७५,५३,०७ | ५,५०,००,०० | १,००,००,०० | १,००,००,०० | | |
| **खूद शेयर लगानी** | **८,९०,१८,१३** | **९,७१,७२,०७** | **१३,८९,३६,०८** | **६,९७,३५,००** | **२,५१,०१,०८** | **४,४१,००,००** |
| आन्तरिक शेयर लगानी | ५,३५,६५,४५ | ९,६७,८४,७९ | १३,८९,३६,०८ | ६,९७,३५,०० | २,५१,०१,०८ | ४,४१,००,०० |
| वैदेशिक शेयर लगानी | ३,५४,५२,६८ | ३,८७,२८ | ० | | | |
| **खूद वैदेशिक ऋण** | **२,२२,०६,३५** | **-७,७७,२६,९३** | **-२९,२५,२०,८६** | **२०,२७,६६,८४** | | **-४९,५२,८७,७०** |
| वैदेशिक ऋणको सांवा भुक्तानी | १४,१९,००,७९ | १५,९१,६३,५७ | २०,२७,६६,८४ | २०,२७,६६,८४ | | |
| वैदेशिक ऋण प्राप्ति(घटाउने ) | ११,९६,९४,४४ | २३,६८,९०,५० | ४९,५२,८७,७० | | | ४९,५२,८७,७० |
| **खूद आन्तरिक ऋण** | **१,८९,७२,३७** | **-१८,८४,७५,४९** | **-२०,२०,५१,००** | **-२०,२०,५१,००** | | |
| आन्तरिक ऋणको सांवा भुक्तानी | २०,९४,००,९२ | २५,१५,२४,५१ | ३२,५४,४९,०० | ३२,५४,४९,०० | | |
| आन्तरिक ऋण प्राप्ति(घटाउने ) | १९,०४,२८,५५ | ४४,००,००,०० | ५२,७५,००,०० | ५२,७५,००,०० | | |
| **बचत (-) न्यून (+)** | **-६,३०,१७,७७** | **-२५,१७,७५,०७** | **०** | **०** | **०** | **०** |

# राजस्व तथा अनुदान प्राप्तिको अनुमान

## आर्थिक बर्ष २०७१/७२

अनुसूची -२

(रू. हजारमा)

| शीर्षक | २०६९/७० को यथार्थ आय | २०७०/७१ को संशोधित अनुमान | २०७१/७२ को लक्ष्य | वर्तमान स्रोतबाट | कर परिवर्तन तथा प्रशासनिक सुधारबाट |
|---|---|---|---|---|---|
| **कर** | २,५९,२१,४९,३७ | ३,१२,६२,१५,९९ | ३,७४,७०,५९,९८ | ३,७२,८७,८७,०१ | १,८२,७२,९७ |
| **आय, मुनाफा तथा पूंजीगत लाभमा लाग्ने कर** | ६४,१८,६६,९१ | ७५,२३,७९,८४ | ९१,०१,८३,११ | ९०,५६,२७,९१ | ४५,५५,२० |
| **एकलौटी फर्म तथा व्यक्तिगत आयमा लाग्ने कर** | १५,५४,१४,८१ | १९,८५,५१,७३ | २३,८७,६६,११ | २३,७२,६४,२० | १५,०१,९१ |
| ११११११ एकलौटी फर्म तथा व्यक्तिगत आयमा लाग्ने कर | ६,१७,५६,३७ | ७,८५,५१,४४ | ९,४२,४८,७६ | ९,३६,५९,४६ | ५,८९,३० |
| १११११२ पारिश्रमिक कर | ८,४४,८५,६९ | १०,४९,६३,२४ | १२,६८,०२,४७ | १२,६०,०४,९५ | ७,९७,५२ |
| १११११३ पूंजीगत लाभ कर | ९१,७२,७५ | १,५०,३७,०५ | १,७७,१४,८८ | १,७५,९९,७९ | १,१५,०९ |
| **निकायको आयमा लाग्ने कर** | ३७,०६,७२,४३ | ४१,९७,५३,८१ | ५०,९०,८०,५९ | ५०,७०,४४,६९ | २०,३५,९० |
| १११२१ निकायको मुनाफामा लाग्ने कर-सरकारी संस्थान | ४,७८,३३,२६ | ४,४९,९९,७८ | ५,४३,३५,२३ | ५,३९,९३,७६ | ३,४१,४७ |
| १११२२ निकायको मुनाफामा लाग्ने कर-पब्लिक लि. कम्पनी | १४,१६,४७,५९ | १६,४५,५०,३१ | १९,९६,२५,२९ | १९,९०,२५,९३ | ५,९९,३६ |
| १११२३ निकायको मुनाफामा लाग्ने कर- प्राइभेट लिमिटेड कम्पनी | १५,१२,६३,२१ | १७,१७,०८,४३ | २०,८३,८२,०७ | २०,७५,६९,०२ | ८,१३,०५ |
| १११२४ निकायको मुनाफामा लाग्ने कर-अन्य संस्था | २,७६,९७,५९ | ३,७१,६५,३५ | ४,५१,२३,२८ | ४,४८,४१,२६ | २,८२,०२ |
| १११२५ पूंजीगत लाभ कर - निकाय | २२,३०,७८ | १३,२९,९४ | १६,१४,७२ | १६,१४,७२ | ० |
| **लगानीको आय तथा अन्य आयमा लाग्ने कर** | ११,५७,७९,६७ | १३,४०,७४,३० | १६,२३,३६,४१ | १६,१३,१९,०२ | १०,१७,३९ |
| १११३१ सम्पत्ति बहाल तथा पट्टा वापतको आयमा लाग्ने कर | ३,८३,४७,३२ | ३,५३,४५,१२ | ५,३५,१६,४० | ५,३१,७९,४२ | ३,३६,९८ |
| १११३२ व्याजमा लाग्ने कर | ५,५०,०५,५८ | ७,२०,६४,५८ | ७,७३,२७,३४ | ७,६८,४३,७६ | ४,८३,५८ |
| १११३३ लाभांशमा लाग्ने कर | १,७३,२४,७५ | २,१३,६८,६७ | २,४३,४४,६७ | २,४१,९२,५२ | १,५२,१५ |
| १११३४ लगानी सम्बन्धी अन्य आयमा लाग्ने कर | ५९,२० | ९९,१६ | ८०,११ | ७९,५९ | ५२ |
| १११३५ आकस्मिक लाभ कर | ६,८३,९५ | ७,१३,८७ | ९,६५,४६ | ९,५९,४४ | ६,०२ |
| १११३६ अन्य आयमा लाग्ने कर | ४३,५८,८७ | ४४,८२,९० | ६१,०२,४३ | ६०,६४,२९ | ३८,१४ |
| **पारिश्रमिकमा आधारित कर** | १,८८,०६,२९ | २,७३,५०,११ | २,९९,९०,५५ | २,९३,९०,७४ | ५,९९,८१ |
| **पारिश्रमिकमा आधारित सामाजिक सुरक्षा कर** | १,८८,०६,२९ | २,७३,५०,११ | २,९९,९०,५५ | २,९३,९०,७४ | ५,९९,८१ |
| ११२११ पारिश्रमिकमा आधारित सामाजिक सुरक्षा कर | १,८८,०६,२९ | २,७३,५०,११ | २,९९,९०,५५ | २,९३,९०,७४ | ५,९९,८१ |
| **सम्पत्ति कर** | ५,३४,०१,६८ | ४,६७,३४,४० | ५,४२,२४,५६ | ५,२९,६०,०६ | १२,६४,५० |
| **अचल सम्पत्तिमा लाग्ने कर** | ३७,४२ | ४,५१,८६ | ५,३६,८१ | ५,३६,८१ | ० |
| ११३११ वार्षिक सम्पत्ति कर | ३७,४२ | ४,५१,८६ | ५,३६,८१ | ५,३६,८१ | ० |
| **वित्तीय र पूंजीगत कारोबारमा लाग्ने कर** | ५,३३,६४,२६ | ४,६२,८२,५४ | ५,३६,८७,७५ | ५,२४,२३,२५ | १२,६४,५० |
| ११३४१ घर जग्गा रजिष्ट्रेशनमा लाग्ने कर | ५,३३,६४,२६ | ४,६२,८२,५४ | ५,३६,८७,७५ | ५,२४,२३,२५ | १२,६४,५० |
| **वस्तु तथा सेवामा आधारित कर** | १,२९,२७,०४,८० | १,५८,६९,०९,५९ | १,९२,०२,८१,७९ | १,९०,८४,२८,३३ | १,१८,५३,४६ |
| **मूल्य अभिवृद्धि कर ( मू .अ .क. )** | ८३,४१,८३,६९ | १,०१,५२,६८,८८ | १,२१,७३,०७,३९ | १,२१,०२,१५,६२ | ७०,९१,७७ |
| ११४११ मू. अ. क. -उत्पादन | ९,७४,८८,३९ | ११,४५,२४,४० | १३,७४,२९,२८ | १३,६५,७०,३५ | ८,५८,९३ |
| ११४१२ मू. अ. क. -आयात | ५५,०३,८३,०७ | ६७,१९,८१,१३ | ८०,५७,७७,३५ | ८०,११,८१,०० | ४५,९६,३५ |
| ११४१३ मू. अ. क. -वस्तु बिक्री र वितरण | ६,३०,७६,७० | ७,८६,६४,८३ | ९,३७,९७,८० | ९,३२,०७,८१ | ५,८९,९९ |
| ११४१४ मू. अ. क. -परामर्श तथा ठेक्का | ५,५०,६३,२६ | ६,४९,४७,८४ | ७,७९,३७,४१ | ७,७४,५०,३० | ४,८७,११ |
| ११४१५ मू. अ. क. -पर्यटन सेवा | १,२०,१९,७९ | १,४६,५९,३२ | १,७७,९१,१८ | १,७६,८१,२४ | १,०९,९४ |
| ११४१६ मू. अ. क. -संचार सेवा, विमा, हवाई उडान र अन्य सेवा | ४,३५,९४,८५ | ५,४९,०६,४७ | ६,५८,७२,५० | ६,५५,२३,२९ | ३,४९,२१ |
| ११४१७ मू. अ. क. -बेदर्तावालाले संकलन गर्ने | १,२५,५७,६३ | १,५५,८४,८९ | १,८७,०१,८७ | १,८६,०१,६३ | १,००,२४ |
| **अन्तः शुल्क** | ३६,२३,४६,६४ | ४५,३९,०६,२१ | ५५,३३,११,६७ | ५४,९२,०३,८८ | ४१,०७,७९ |
| ११४२१ सुर्तिजन्य पदार्थ | ५,३५,७६,३६ | ७,२८,८०,७२ | ८,८८,३२,७८ | ८,८०,७३,९१ | ७,५८,८७ |
| ११४२२ मदिरा | ८,३५,३५,५६ | १०,३६,८९,५५ | १२,६२,१९,६९ | १२,५१,४०,०२ | १०,७९,६७ |
| ११४२३ बियर | ४,८६,४८,१२ | ५,२९,३३,१५ | ६,४०,४३,११ | ६,३४,९१,९४ | ५,५१,१७ |
| ११४२४ अन्य औद्योगिक उत्पादन | ३,०७,७०,६७ | ३,७१,२५,४१ | ४,४७,०१,२९ | ४,४४,१७,०५ | २,८४,२४ |
| ११४२५ अन्तः शुल्क आयात | १४,५८,१५,९३ | १८,७२,७७,३८ | २२,९५,१४,८० | २२,८०,८०,९६ | १४,३३,८४ |
| **विशेष सेवामा लाग्ने कर** | ६५,५३,२८ | ८४,१७,७६ | १,०१,१४,०२ | १,००,९०,१४ | २३,८८ |
| ११४४१ वैदेशिक रोजगार सेवा कर | ४,८७ | ४,४५ | ५,०० | ५,०० | ० |
| ११४४२ स्वास्थ सेवा कर | ३३,८१,८२ | ४२,७३,५० | ५०,८५,४७ | ५०,८५,४७ | ० |

| शीर्षक | २०६९/७० को यथार्थ आय | २०७०/७१ को संशोधित अनुमान | २०७१/७२ को लक्ष्य | वर्तमान स्रोतबाट | कर परिवर्तन तथा प्रशासनिक सुधारबाट |
|---|---|---|---|---|---|
| ११४४३ शिक्षा सेवा शुल्क- शैक्षिक संस्था | २५,३१,०३ | ३०,४२,७६ | ३८,६०,४२ | ३८,३६,५४ | २३,८८ |
| ११४४४ शिक्षा सेवा शुल्क- वैदेशिक अध्ययन | ६,३५,५६ | १०,९७,०५ | ११,६३,१३ | ११,६३,१३ | ० |
| **पुर्वाधार सेवाको उपयोग तथा सवारी साधनमा लाग्ने कर** | ८,९६,२१,१९ | १०,९३,१६,७४ | १३,९५,४८,७१ | १३,८९,१८,६९ | ६,३०,०२ |
| ११४५१ सवारी साधन कर | ४,३१,३९,४५ | ४,६०,५२,३८ | ५,५०,३२,५९ | ५,४४,०२,५७ | ६,३०,०२ |
| ११४५२ पुर्वाधार सेवाको उपयोगमा लाग्ने कर | १,५०,२२,८० | २,२०,५९,१४ | २,९४,६२,०३ | २,९४,६२,०३ | ० |
| ११४५३ सडक मर्मत तथा सुधार दस्तुर | १,५१,०२,७५ | २,२१,७४,२२ | २,९६,२६,९७ | २,९६,२६,९७ | ० |
| ११४५४ सडक निर्माण तथा संभार दस्तुर | १,६३,५६,१९ | १,९०,३१,०० | २,५४,२७,१२ | २,५४,२७,१२ | ० |
| **वैदेशिक व्यापारमा आधारित कर** | ५६,९३,१८,१५ | ६९,३६,३०,७४ | ८०,६६,९२,५६ | ८०,६६,९२,५६ | ० |
| **आयातमा लाग्ने भंसार महसुल** | ५४,३२,७८,९० | ६५,५१,०६,४२ | ७६,६१,९४,८४ | ७६,६१,९४,८४ | ० |
| ११५११ भंसार महसुल - आयात | ५०,८४,७१,२२ | ६२,८३,१४,८३ | ७२,५९,३७,९६ | ७२,५९,३७,९६ | ० |
| ११५१२ भारतीय अन्तशुल्क फिर्ता | ३,४७,९४,२४ | २,६७,८९,९३ | ४,०२,५१,९१ | ४,०२,५१,९१ | ० |
| ११५१३ आयातमा लाग्ने स्थानीय विकास शुल्क | १३,४४ | १,६६ | ४,९७ | ४,९७ | ० |
| **भंसार महसुल -निर्यात** | ४३,९०,९७ | ९९,३१,४८ | ८७,८५,८९ | ८७,८५,८९ | ० |
| ११५२१ भंसार महसुल -निर्यात | ४२,३३,८५ | ९८,७७,७८ | ८७,१४,३० | ८७,१४,३० | ० |
| ११५२२ निर्यात सेवा शुल्क | १,५७,१२ | ५३,७० | ७१,५९ | ७१,५९ | ० |
| **वैदेशिक व्यापारमा आधारित अन्य कर** | २,१६,४८,२८ | २,८५,९२,८४ | ३,१७,११,८३ | ३,१७,११,८३ | ० |
| ११५६१ कृषि सुधार शुल्क | १,७१,९१,२६ | २,४०,६९,४९ | २,५२,५८,९३ | २,५२,५८,९३ | ० |
| ११५६२ भंसार सम्बन्धी अन्य आय | ४४,५७,०२ | ४५,२३,३५ | ६४,५२,९० | ६४,५२,९० | ० |
| **अन्य कर** | १,६०,५१,५४ | १,९२,११,३१ | २,५६,८७,४१ | २,५६,८७,४१ | ० |
| **व्यवसायले भुक्तानी गर्ने** | ६२,३४,०२ | ७४,७७,४४ | १,००,०९,८० | १,००,०९,८० | ० |
| ११६११ कम्पनी रजिष्ट्रेशन दस्तुर | ६०,३८,७४ | ७२,७३,७५ | ९७,१८,४५ | ९७,१८,४५ | ० |
| ११६१२ एजेन्सी रजिष्ट्रेशन दस्तुर | १,९५,२८ | २,०३,६९ | २,९१,३५ | २,९१,३५ | ० |
| **व्यवसाय बाहेक अन्यले भुक्तानी गर्ने** | ९८,१७,५२ | १,१७,३३,८७ | १,५६,७७,६१ | १,५६,७७,६१ | ० |
| ११६२१ सवारी चालक अनुमति पत्रको इजाजतपत्र दस्तूर,सवारीको दर्ता किताब(ब्लू बुक) दस्तूर | ९७,०६,५३ | १,१६,२३,१७ | १,५५,२९,७१ | १,५५,२९,७१ | ० |
| ११६२२ हातहतियारको इजाजतपत्र दस्तूर | १,१०,९९ | १,१०,७० | १,४७,९० | १,४७,९० | ० |
| **वैदेशिक अनुदान** | ३५,२२,९८,०५ | ४७,३१,१०,४८ | ७३,३८,५९,२४ | ७३,३८,५९,२४ | ० |
| **द्विपक्षीय वैदेशिक अनुदान** | १६,७८,३४,९९ | २४,९४,८२,२७ | ३१,४१,०१,०९ | ३१,४१,०१,०९ | ० |
| **चालु अनुदान** | १२,८६,९४,९१ | १६,४५,७९,७१ | १९,४७,१७,६४ | १९,४७,१७,६४ | ० |
| १३१११ चालु अनुदान | १२,८६,९४,९१ | १६,४५,७९,७१ | १९,४७,१७,६४ | १९,४७,१७,६४ | ० |
| **पूंजीगत अनुदान** | ३,९१,४०,०८ | ८,४९,०२,५६ | ११,९३,८३,४५ | ११,९३,८३,४५ | ० |
| १३१२१ पूंजीगत अनुदान | ३,९१,४०,०८ | ८,४९,०२,५६ | ११,९३,८३,४५ | ११,९३,८३,४५ | ० |
| **वहुपक्षीय वैदेशिक अनुदान** | ११,७९,४६,३२ | १६,२०,८१,३७ | ३१,२७,४७,५१ | ३१,२७,४७,५१ | ० |
| **चालु अनुदान** | ७,५४,२८,४० | १०,९४,११,८४ | १६,८०,२८,४० | १६,८०,२८,४० | ० |
| १३२११ चालु अनुदान | ७,५४,२८,४० | १०,९४,११,८४ | १६,८०,२८,४० | १६,८०,२८,४० | ० |
| **पूंजीगत अनुदान** | ४,२५,१७,९२ | ५,२६,६९,५३ | १४,४७,१९,११ | १४,४७,१९,११ | ० |
| १३२२१ पूंजीगत अनुदान | ४,२५,१७,९२ | ५,२६,६९,५३ | १४,४७,१९,११ | १४,४७,१९,११ | ० |
| **वैदेशिक अन्य अनुदान** | ६,६५,१६,७४ | ६,१५,४६,८४ | १०,७०,१०,६४ | १०,७०,१०,६४ | ० |
| **चालु अनुदान** | ४,६४,१५,२१ | ५,७२,१०,९४ | ९,६०,६२,९३ | ९,६०,६२,९३ | ० |
| १३३११ चालु अनुदान | ४,६४,१५,२१ | ५,७२,१०,९४ | ९,६०,६२,९३ | ९,६०,६२,९३ | ० |
| **पूंजीगत अनुदान** | २,०१,०१,५३ | ४३,३५,९० | १,०९,४७,७१ | १,०९,४७,७१ | ० |
| १३३२१ पूंजीगत अनुदान | २,०१,०१,५३ | ४३,३५,९० | १,०९,४७,७१ | १,०९,४७,७१ | ० |
| **अन्य राजस्व** | ३६,८०,६२,१७ | ४१,९०,७८,३१ | ४८,१९,४०,०२ | ४८,१६,९७,३८ | २,४२,६४ |

| शीर्षक | २०६९/७० को यथार्थ आय | २०७०/७१ को संशोधित अनुमान | २०७१/७२ को लक्ष्य | वर्तमान स्रोतबाट | कर परिवर्तन तथा प्रशासनिक सुधारबाट |
|---|---|---|---|---|---|
| **सम्पत्तिबाट प्राप्त आय** | १७,६०,८४,०५ | २०,५३,००,१२ | २३,०४,९५,१० | २३,०२,५२,४६ | २,४२,६४ |
| **ब्याज** | ५२,७८,६३ | ५७,०५,१४ | ६९,१२,५८ | ६९,१२,५८ | ० |
| १४१११ वित्तीय निकायबाट प्राप्त ब्याज | २३,२१,०३ | २४,९७,८९ | ३०,३९,३९ | ३०,३९,३९ | ० |
| १४११२ व्यापारिक निकायबाट प्राप्त ब्याज | ५३,३० | ५८,३० | ७०,४१ | ७०,४१ | ० |
| १४११३ औद्यौगिक निकायबाट प्राप्त ब्याज | ४१ | ४५ | ५४ | ५४ | ० |
| १४११४ सेवामुलक निकायबाट प्राप्त ब्याज | २८,९५,५० | ३१,३९,४१ | ३७,९१,२६ | ३७,९१,२६ | ० |
| १४११५ अन्य निकायबाट प्राप्त ब्याज | ८,३९ | ९,०९ | १०,९८ | १०,९८ | ० |
| **लाभांश** | १०,८४,३६,५६ | १२,९२,६५,१३ | १४,१७,१०,५० | १४,१७,१०,५० | ० |
| १४१२१ वित्तीय निकायबाट प्राप्त लाभांश | ४,२३,०८,२२ | ५,७५,७२,४५ | ५,५७,९७,०८ | ५,५७,९७,०८ | ० |
| १४१२२ व्यापारिक निकायबाट प्राप्त लाभांश | १०,५९ | ७,४८ | ९,०३ | ९,०३ | ० |
| १४१२३ औद्यौगिक निकायबाट प्राप्त लाभांश | २,३९,३८ | २,५५,६६ | ३,०८,७४ | ३,०८,७४ | ० |
| १४१२४ सेवामुलक निकायबाट प्राप्त लाभांश | ६,५८,७७,७७ | ७,१४,२८,८९ | ८,५५,९४,८६ | ८,५५,९४,८६ | ० |
| १४१२५ अन्य निकायबाट प्राप्त लाभांश | ६० | ६५ | ७९ | ७९ | ० |
| **भाडा र रोयल्टी** | ६,२३,६८,८६ | ७,०३,२९,८५ | ८,१८,७२,०२ | ८,१६,२९,३८ | २,४२,६४ |
| १४१५१ सरकारी सम्पत्तीको वहालबाट प्राप्त आय | २८,५५,६४ | ३१,००,३० | ३७,४४,०२ | ३७,४४,०२ | ० |
| १४१५२ क्यासिनोबाट प्राप्त रोयल्टी | १२,३५,७३ | ८,३९,५० | १६,१७,६२ | १३,७४,९८ | २,४२,६४ |
| १४१५३ खानी रोयल्टी | ६,९३,५८ | ७,५२,३७ | ९,०८,५९ | ९,०८,५९ | ० |
| १४१५४ जलस्रोत क्षेत्रको आय तथा रोयल्टी | १,५६,४४,०६ | १,९१,६२,३० | २,०९,८४,२३ | २,०९,८४,२३ | ० |
| १४१५५ वन तथा वन पैदावार बिक्री वापत प्राप्त आय तथा वन रोयल्टी | १,३५,६९,०९ | १,४७,१४,१० | १,७७,६९,२३ | १,७७,६९,२३ | ० |
| १४१५६ अन्य रोयल्टी | २,८३,७०,७६ | ३,१७,६१,२८ | ३,६८,४८,३३ | ३,६८,४८,३३ | ० |
| **वस्तु तथा सेवा विक्रीबाट प्राप्त रकम** | ११,२४,७०,४६ | १२,६७,९८,२४ | १४,७२,३३,६७ | १४,७२,३३,६७ | ० |
| **वस्तु तथा विक्रीबाट प्राप्त रकम** | ५,३७,४१,३८ | ६,०१,७९,७८ | ७,०२,८५,१८ | ७,०२,८५,१८ | ० |
| १४२११ कृषि उत्पादनको विक्रीबाट प्राप्त रकम | १०,९३,७४ | ११,८७,५० | १४,३४,०६ | १४,३४,०६ | ० |
| १४२१२ सरकारी सम्पत्तीको विक्रीबाट प्राप्त रकम | २६,७३,३८ | ६,४६,२५ | ७,८०,४४ | ७,८०,४४ | ० |
| १४२१३ अन्य विक्रीबाट प्राप्त रकम | ५,६६,२६ | ६,१३,८६ | ७,४१,३२ | ७,४१,३२ | ० |
| १४२१४ दूर संचार सेवा शुल्क | ४,०७,८६,३४ | ४,७९,०२,०२ | ५,५४,५८,१६ | ५,५४,५८,१६ | ० |
| १४२१५ टेलिफोन स्वामित्वको शुल्क | ८२,४७,२९ | ९८,०२,९६ | १,१८,३८,३८ | १,१८,३८,३८ | ० |
| १४२१६ निजी धारा वापतको शुल्क | ३,५७,१४ | ९,६१ | ११,६० | ११,६० | ० |
| १४२१७ नहर तथा कुलो उपयोग वापतको शुल्क | १०,९० | ११,६३ | १४,०४ | १४,०४ | ० |
| १४२१८ विद्युत सेवा शुल्क | ६,३३ | ५,९५ | ७,१८ | ७,१८ | ० |
| **प्रशासनिक सेवा शुल्क** | ५,८७,२९,०८ | ६,६६,१८,४६ | ७,६९,४८,४९ | ७,६९,४८,४९ | ० |
| १४२२१ न्यायिक दस्तूर | ५२,८९,६० | ५७,३७,८४ | ६९,२९,२० | ६९,२९,२० | ० |
| १४२२२ हुलाक सेवा शुल्क | २६,०६,२८ | २८,२९,७९ | ३४,१७,३४ | ३४,१७,३४ | ० |
| १४२२३ शिक्षा क्षेत्रको आम्दानी | ४८,५५,०७ | ५२,७२,२६ | ६३,६६,९५ | ६३,६६,९५ | ० |
| १४२२४ परीक्षा शुल्क | ४०,४५,५७ | ४४,००,५५ | ५३,१४,२५ | ५३,१४,२५ | ० |
| १४२२५ यातायात क्षेत्रको आम्दानी | १६,७९,९१ | १८,३४,३१ | २२,१५,१७ | २२,१५,१७ | ० |
| १४२२६ आयात निर्यात इजाजत पत्र दस्तूर | ५,७४,७८ | ६,२३,४२ | ७,५२,८७ | ७,५२,८७ | ० |
| १४२२७ अन्य प्रशासनिक सेवा शुल्क | ३,९६,७७,८७ | ४,५९,२०,२९ | ५,१९,५२,७१ | ५,१९,५२,७१ | ० |
| **दण्ड जरिवाना र जफत** | ३३,८१,५१ | ३६,७१,५२ | ४४,३३,८५ | ४४,३३,८५ | ० |
| **दण्ड,जरिवाना र जफत** | ३३,८१,५१ | ३६,७१,५२ | ४४,३३,८५ | ४४,३३,८५ | ० |
| १४३११ न्यायिक दण्ड,जरिवाना र जफत | ८,४४,०१ | ९,१३,५७ | ११,०३,२६ | ११,०३,२६ | ० |
| १४३१२ प्रशासनिक दण्ड,जरिवाना र जफत | २५,३७,५० | २७,५७,९५ | ३३,३०,५९ | ३३,३०,५९ | ० |
| **अनुदान बाहेक स्वेच्छिक हस्तान्तरण** | ५१,४२ | १८,९२ | २४,१० | २४,१० | ० |
| **अनुदान बाहेक स्वेच्छिक हस्तान्तरण** | ५१,४२ | १८,९२ | २४,१० | २४,१० | ० |

| शीर्षक | २०६९/७० को यथार्थ आय | २०७०/७१ को संशोधित अनुमान | २०७१/७२ को लक्ष्य | वर्तमान स्रोतबाट | कर परिवर्तन तथा प्रशासनिक सुधारबाट |
|---|---|---|---|---|---|
| १४४११ चालु हस्तान्तरण | ७,१८ | ४,२१ | १०,२९ | १०,२९ | ० |
| १४४१२ पूंजीगत हस्तान्तरण | ४४,२४ | १४,७१ | १३,८१ | १३,८१ | ० |
| **विविध राजस्व** | ७,६०,७४,७३ | ८,३२,८९,५१ | ९,९७,५३,३० | ९,९७,५३,३० | ० |
| **प्रशासनिक शुल्क - भ्रमण तथा पर्यटन** | ६,७६,४२,३२ | ७,४२,१३,१० | ८,८७,९२,३४ | ८,८७,९२,३४ | ० |
| १४५११ राहदानी शुल्क | ४,१९,६९,६८ | ४,६३,७७,३२ | ५,५१,१६,५६ | ५,५१,१६,५६ | ० |
| १४५१२ भिसा शुल्क | २,०१,०५,६६ | २,१७,९९,८५ | २,६३,८६,६० | २,६३,८६,६० | ० |
| १४५१३ पर्वतारोहण र पदयात्रा स्वीकृति शुल्क | ५५,२६,७७ | ५९,९२,३३ | ७२,३६,५३ | ७२,३६,५३ | ० |
| १४५१४ अन्य पर्यटकहरुलाई लाग्ने शुल्क | ४०,२१ | ४३,६० | ५२,६५ | ५२,६५ | ० |
| **अन्य राजस्व** | ८३,२२,९० | ९०,२२,०८ | १,०८,९५,३५ | १,०८,९५,३५ | ० |
| १४५२१ प्रदुषण नियन्त्रण शुल्क | ६७,६३,५७ | ७३,२४,७८ | ८८,४५,६४ | ८८,४५,६४ | ० |
| १४५२२ अन्य राजस्व | १५,५९,३३ | १६,९७,३० | २०,४९,७१ | २०,४९,७१ | ० |
| **पूंजीगत राजस्व** | १,०९,५१ | ५४,३३ | ६५,६१ | ६५,६१ | ० |
| १४५३१ सरकारी घर,जग्गा,गुडवील विक्रीबाट प्राप्त रकम | १,०९,५१ | ५४,३३ | ६५,६१ | ६५,६१ | ० |
| **गत वर्षको नगद मौज्दात तथा बेरुजू** | १,९२,११,९२ | ० | १८,५३,५३,०६ | १८,५३,५३,०६ | ० |
| **गत वर्षको नगद मौज्दात तथा बेरुजू** | १,९२,११,९२ | ० | १८,५३,५३,०६ | १८,५३,५३,०६ | ० |
| **गत वर्षको नगद मौज्दात तथा बेरुजू** | १,९२,११,९२ | ० | १८,५३,५३,०६ | १८,५३,५३,०६ | ० |
| १५१११ गत वर्षको नगद बाँकी मौज्दात | १,०५,२२,१२ | ० | १८,५३,५३,०६ | १८,५३,५३,०६ | ० |
| १५११२ बेरुजू | ८६,८९,८० | ० | ० | ० | ० |
| **राजस्व ,अनुदानको जम्मा :** | ३,३३,१७,२१,५१ | ४,०१,८४,०४,७८ | ५,१४,८२,१२,३० | ५,१२,९६,९६,६९ | १,८५,१५,६१ |

